# दुई शब्द

वाधूल मुनि कृष्णयजुर्वेदको वाधूलशाखाका प्रवचनकर्ता मुनि हुन् । अन्य स्मृति जस्तै यो स्मृति पनि उनकै अनुयायी कुनै शिष्यले कुनै कालखण्डमा उनकै नाममा लेखेको अनुमान गरिएको पाइन्छ । यसमा विशेषतः वैष्णव ब्राह्मणका लागि नियमहरू बताइएका छन् । यी नियमहरुमध्येका कतिपय नियम अरुका लागि पनि उपेक्षा गरिहाल्नु पर्ने खालका छैनन् ।

मैले यो ग्रन्थ कात्यायन वैदिक साहित्य प्रकाशन, होशियारपुर, पञ्जाबबाट वि.सं.२०५६ सालमा प्रकाशन भएको डा.व्रजबिहारी चौबेले सम्पादन र हिन्दीमा अनुवाद गरेको ग्रन्थलाई आधार बनाएर नेपालीमा भावानुवाद गरेको हुँ । स्मृतिसन्दर्भमा दिइएको वाधूलस्मृतिमा भन्दा यसमा केही श्लोकहरू बढी छन् ।



यस स्मृति भित्र के के छन्, वा यहाँ उल्लेख भएका विषयवस्तुका वारेमा अन्यत्र ग्रन्थमा के लेखिएको छ त्यसबारेमा उल्लेख गर्दै भूमिका लम्ब्याउन मन लागेन । यो स्मृति पनि यसअघिका अन्य स्मृति जस्तै छोटो तरिकाले पस्किएको छु । भएका भूलचूक औंल्याइ दिए, आभारी हुने थिएँ ।

-भावानुवादक ।

## विषयसूची

विषयसूची पूर्ण भयो

## ॥ श्री गणेशाय नमः ॥

ॐ

## श्री परमात्मने नमः

## ॥ अथ ॥

# ॥ वाधूलस्मृतिः ॥

**वाधूलमुनिमासीनमभिगम्य महर्षयः ।**
**प्रतिपूज्य यथान्यायमिदं वचनमब्रुवन् ॥१॥**

बसिरहेका वाधूल मुनि समक्ष पुगी उनलाई यथोचित अभिवादन र
पूजा गरेपछि महर्षिहरूले भन्न लागे...।

**भगवन् ब्राह्मणादीनामाचारं वद तत्त्वतः ।**
**तच्छ्रुत्वा मुनिशार्दूलस्तानृषीन् प्राह धर्मवित् ॥२॥**

भगवन् ! हजुर ब्राह्मण आदिका आचारका बारेमा सारांशमा बताउनु होस् । त्यस्ता
कुरा सुनेपछि धर्मज्ञ मुनिश्रेष्ठले ती ऋषिहरूलाई भन्नु भयो कि..।



**ब्राह्म्यान्मुहूर्तादारभ्य त्रिकाले विहितं तथा ।**
**नित्यनैमित्तिकं चैव प्रवक्ष्यामि यथामति ॥३॥**

ब्राह्म मुहूर्तदेखि तीन वटै सन्ध्यामा गर्नुपर्ने सन्ध्याकर्म तथा अन्य नित्य र नैमित्तिक
कर्मका बारेमा पनि आफ्नो बुद्धिले जाने-देखेसम्मका कुरा बताउँदछु (सुन्नु होस्) ।

**ब्राह्मे मुहूर्ते सम्प्राप्ते त्यक्तनिद्रः प्रसन्नधिः ।**
**प्रक्षाल्य पादावाचम्य हरिसङ्कीर्तनं चरेत् ॥४॥**

ब्राह्ममुहूर्त आएपछि निद्रा (सुत्न) छाडी, प्रसन्न भएर, दुवै गोडा पखाली,
आचमन गरेर श्रीहरिका गुणगान गाउनु पर्दछ ।

**ब्राह्मे मुहूर्ते निद्रां च कुरुते सर्वदा तु यः ।**
**अशुचिं तं विजानीयादनर्हः सर्वकर्मसु ॥५॥**

जो सधैँ ब्राह्ममुहूर्तमा सुत्दछ, उसलाई अपवित्र समभिनु पर्दछ ।
उ सबै कर्मका लागि अयोग्य हुन्छ ।

**नक्षत्रज्योतिरारभ्य सूर्यस्योदयनं प्रति ।**
**प्रातःसन्ध्येति तां प्राहुः श्रुतयो मुनिसत्तमाः ॥६॥**

ताराको प्रकाशबाट शुरु भई सूर्य नउँदासम्मको समयलाई वेद
तथा श्रेष्ठ मुनिजनले "प्रातः सन्ध्या" भनी बताएका छन् ।

**प्रातःसन्ध्यां सनक्षत्रामुपासीत यथाविधि ।**
**सादित्यां पश्चिमां सन्ध्यामर्धास्तमितभास्करम् ॥७॥**

नक्षत्रको प्रकाश तथा सूर्योदयका साथमा प्रातः सन्ध्या तथा सूर्य आधा
अस्ताए पछि सूर्यसहितको साँझको सन्ध्या गर्नु पर्दछ ।

**दिवासन्ध्यासु कर्णस्थब्रह्मसूत्र उदङ्मुखः ।**
**कुर्यान्मूत्रपुरीषे तु रात्रौ चेद्दक्षिणामुखः ॥८॥**

दिनमा र प्रातः सन्ध्यामा कानमा जनै सिउरी उत्तरतिर फर्केर तथा
रातमा दक्षिणतिर फर्केर मलमूत्र त्याग गर्नु पर्दछ ।

**अवगुण्ठितसर्वाङ्गस्तृणैराच्छाद्य मेदिनीम् ।**
**घ्राणास्ये वाससाच्छाद्य मलमूत्रं त्यजेद् बुधः ॥९॥**

बुद्धिमानले शरीरका सबै अङ्ग खुम्च्याई; पृथ्वीलाई घाँसपातले ढाकी;
टाउको, नाक र मुख कपडाले छोपी मलमूत्र त्याग गर्नू ।

**अप्रावृतशिरो यस्तु विण्मूत्रं सृजति द्विजः ।**
**तच्छिरः शतधा भूयादिति देवाः शपन्ति तम् ॥१०॥**

जुन द्विज टाउकोलाई कपडाले नढाकी मलमूत्र त्याग गर्दछ उसलाई "तेरो टाउको
सय खण्ड होस् (दिमाग एकाग्र नहोस्)" भनी देवताले श्राप दिन्छन् ।

**उत्थाय वामहस्तेन गृहीत्वा चोर्ध्वमेहनम् ।**
**शौचदेशमथाभेत्य कुर्याच्छौचं मृदम्बुभिः ॥११॥**

शौचस्थलबाट उठी जननेन्द्रियको टुप्पो देब्रे हातले समातेर उठाई
मलद्वारलाई राम्रोसँग माटोपानी दली सफा गरी पवित्र बनाउनू ।

**अरत्निमात्रमुत्सृज्य कुर्याच्छौचमनुद्धृते ।**
**पश्चात्तच्छोयेत्तीर्थमन्यथा न शुचिर्भवेत् ॥१२॥**

दिसा गरेको ठाउँबाट एक अरत्नि (कुहिनादेखि कान्छी औँलाको टुप्पोसम्मको नाप)
यताउता सरी नउभिई शौचशुद्धि गर्नु पर्दछ । नत्र शुद्ध हुँदैन ।

**विट्छौचं प्रथमं कुर्यान्मूत्रशौचं ततः परम् ।**
**पादशौचं ततः कुर्यात्करशौचं ततः परम् ॥१३॥**

पहिले मलद्वार त्यसपछि जननेन्द्रिय अनि गोडा र त्यसपछि हात सफा गर्नु पर्दछ ।



**पञ्चधा लिङ्गशौचं स्याद्गुदशौचं त्रिवेष्टितम् ।**
**पादयोर्लिङ्गवच्छौचं हस्तयोस्तु चतुर्गुणम् ॥१४॥**

जननेन्द्रियलाई पाँच पटक, गुदद्वारलाई पन्ध्र पटक, दुबै गोडालाई पाँच पटक र
दुबै हातलाई बीस पटक माटोपानीले सफा गर्नु पर्दछ ।

**एतच्छौचं गृहस्थानां द्विगुणं ब्रह्मचारिणाम् ।**
**त्रिगुणं तुन वनस्थानां यतीनां तु चतुर्गुणम् ॥१५॥**

यी नियम गृहस्थका लागि हुन् । ब्रह्मचारीले यसको दोब्बर, वानप्रस्थीले
यसको तेब्बर र सन्यासीले यसको चौबर गर्नु पर्दछ ।

**यद्दिवा विहितं शौचं तदर्धं निशि कीर्तितम् ।**
**तदर्धमातुरे प्रोक्तमातुरस्यार्धमध्वनि ॥१६॥**

दिनमा बताइएको विधिको आधा विधिले रातमा शौचशुद्धि गर्नु भनिएको छ । रोगीले त्यसको पनि आधा र यात्रीले त्यसको पनि आधा पटक शौचशुद्धि गर्नु पर्दछ ।

**विण्मूत्रकरणात्पूर्वमादद्यान्मृत्तिकां सदा ।**
**आददानस्तु तां पश्चात् सवासा जलमाविशेत् ॥१७॥**

मलमूत्र विसर्जन गर्नुभन्दा पहिले नै शुद्धि गर्ने माटो ठिक पार्नु पर्दछ । पछि ठिक पार्ने हो भने वस्त्र लगाएरै जलभित्र छिर्नु पर्दछ ।

**आर्द्रामलकमात्रास्तु ग्रासा इन्दुव्रते स्मृताः ।**
**तथैवाहुतयः सर्वा शौचार्थे याश्च मृत्तिकाः ॥१८॥**

चान्द्रायण व्रतमा नसुकेको ताजा अमलाको गेडाजत्रो एक गाँस हुन्छ । होम हाल्दाखेरी हरेक पटक चरुको मात्रा पनि यति नै हुनु पर्दछ । यसैगरी शौचगर्दा हरेकपटक प्रयोग गरिने माटाको परिमाण पनि यत्ति नै हुनु पर्दछ ।

**शौचं तु द्विविधं प्रोक्तं बाह्यमाभ्यान्तरं तथा ।**

**मृज्जलाभ्यां स्मृतं बाह्यं भावशुद्धिस्तथान्तरम् ॥१९॥**

बाहिरी र भित्री गरी शौचशुद्धि दुई किसिमको हुन्छ । माटो र जलले हुने शुद्धिलाई बाहिरी शुद्धि भनिन्छ भने भाव (भावना) शुद्धिलाई भित्री शुद्धि भनिन्छ ।

**शौचे यत्नः सदा कार्यस्तन्मूलो हि द्विजः स्मृतः ।**
**शौचाचारविहीनस्य समस्ता निष्फला क्रियाः ॥२०॥**

सधैं शुद्ध रहन प्रयाश गर्नु किन कि ब्राह्मणको मूल कुरो नै यही शुद्धि हो । शुद्धि र आचार नहुने (ब्राह्मण) ले गर्ने सबै धर्मकर्म निष्फल हुन्छन् ।

**अन्तर्जानुः शुचौ देश उपविष्ट उदङ्मुखः ।**
**प्राग्वा ब्राह्मेण तीर्थेन द्विजो नित्यमुपस्पृशेत् ॥२१॥**

द्विजले दुबै हात दुई घुँडाका बीचमा पारी, शुद्ध र पवित्र स्थानमा उत्तर वा पूर्वतिर फर्केर बसी ब्राह्मतीर्थ (बूढी औंलाको फेदमा रहेको हत्केलाको भाग) ले सधैं आचमन गर्ने गर्नुपर्दछ ।

**गोकर्णाकृतिहस्तेन माषमग्नं जलं पिबेत् ।**
**तन्न्यूनमधिकं पीत्वा सुरापानसमं भवेत्॥२२॥**

(आचमन गर्दा) गाईको कानजस्तो आकारको हात बनाई मासको गेडा डुब्ने जति जल पिउनु पर्दछ । यसभन्दा कम वा बढी पिउनु मदिरा पिउनु सरह हुन्छ ।

**संहताङ्गुलिना तोयं गृहीत्वा पाणिना द्विजः ।**
**मुक्ताङ्गुष्ठकनिष्ठेन शिष्टेनाचामनं भवेत्॥२३॥**

हातका औंला टम्म जोडी पानी लिएर बूढी औंलो र कान्छी औंलो बाहिर गर्दै शिष्टतापूर्वक आचमन गर्नु पर्दछ ।

**उपविश्य शुचौ देशे प्राङ्मुखो ब्रह्मसूत्रधृक् ।**
**बद्धचूडः कुशकरो द्विजः शुचिरुपस्पृशेत्॥२४॥**



शुद्ध र पवित्र स्थानमा बसी, पूर्वतिर फर्की, जनै लगाएर, टुपी बाँधी, हातमा कुश लिएर द्विजले आचमन गर्नु पर्दछ ।

**अप्सु प्राप्तासु हृदयं ब्राह्मणः शुचितामियात् ।**
**राजन्यः कण्ठं तालुं तु वैश्यः शूद्रस्तथा स्त्रियः॥२५॥**

आचमन गर्दा पिइएको जल हृदयसम्म पुगेपछि ब्राह्मण, घाँटीसम्म पुगेपछि क्षत्रिय तथा तालुसम्म पुगेपछि शूद्र र स्त्री शुद्ध हुन्छन् ।

**सपवित्रेण हस्तेन कुर्यादाचमनक्रियाम् ।**
**नोच्छिष्टं तत्पवित्रं तु भुक्तोच्छिष्टं तु वर्जयेत्॥२६॥**

पवित्र लगाएको हातले नै आचमन गर्ने गर्नु पर्दछ । आचमनले पवित्र अपवित्र हुँदैन । खाना खाँदा भने जुठो हुन्छ (त्यसैले पवित्र फुकालेर अन्त कतै राखी खाना खाने गर्नु पर्दछ) ।

**कुशहस्तः पिबेत्तोयं कुशहस्तः सदाऽऽचमेत् ।**

**सग्रन्थीकुशहस्तस्तु न कदाचिदुपस्पृशेत् ॥२७॥**

हातमा कुश लिएर नै पानी पिउने गर्नू, हातमा कुश लिएर नै आचमन गर्ने गर्नू । तर, गाँठो पारिएका कुश लिएको हातले कहिल्यै आचमन नगर्नू ।

**प्रभासादीनि तीर्थानि गङ्गाद्याः सरितस्तथा ।**
**विप्रस्य दक्षिणे कर्णे सन्तीति मनुरब्रवीत् ॥२८॥**

प्रभास (भारतको काठियावादमा पर्ने एक तीर्थस्थल) आदि तीर्थहरू र गङ्गा आदि नदीहरू ब्राह्मणका दाहिने कानमा रहेका हुन्छन् भनी मनुले बताएका छन् ।

**प्राङ्मुखोदङ्मुखो भूत्वा समाचम्य विशुध्यति ।**
**पश्चिमे पुनराचम्य याम्यां स्नानेन शुध्यति ॥२९॥**

पूर्व वा उत्तरतिर फर्की राम्रोसँग (विधिपूर्वक) आचमन गर्नाले मानिस पवित्र हुन्छ । पश्चिमतिर फर्केर आचमन गरे फेरी आचमन गर्नाले तथा दक्षिणतिर फर्केर आचमन गरे नुहाएर मात्र शुद्ध हुन्छ ।



**आर्द्रवासा जले कुर्यात्तर्पणाचमनं जपम् ।**
**शुष्कवासाः स्थले कुर्यात्तर्पणाचमनं जपम् ॥३०॥**

पानीमा तर्पण, आचमन र जप गर्दा नुहाउँदा लगाएका चिसै कपडामा गर्नू । जमिनमा तर्पण, आचमन र जप गर्दा सुकेका (नभिजेका) कपडा लगाएर गर्नू ।

**आम्रेक्षुखण्डताम्बूलचर्वणे सोमपानके ।**
**विष्ण्वङ्घ्रितोयपाने च नाद्यन्ताचमनं स्मृतम् ॥३१॥**

आँप, उखु र पान चपाउँदा, सोमपान गर्दा तथा भगवान् विष्णुको चरणोदक पिउँदा शुरुमा र अन्तमा आचमन गर्ने विधान छैन ।

**विष्णुपादोद्भवं तीर्थं पीत्वा न क्षालयेत्करम् ।**
**क्षालयेद्यदि मोहेन पञ्चपातकमाप्नुयात् ॥३२॥**

विष्णुको चरणोदक (शालिग्राम आदि नुहाएको जल वा तीर्थको जल पिएपछि हात
पखाल्न हुँदैन । भूलवश (मोहवश) पखाले उसलाई पाँच थरी पाप लाग्दछ ।

**उपवासदिने यस्तु दन्तधावनकृन्नरः ।**
**स घोरं नरकं याति व्याघ्रभक्षश्चतुर्युगम् ॥३३॥**

व्रत-उपवास बसेका दिन जसले दाँत माज्दछ, उ डरलाग्दो नरकमा
पर्दछ र चारै युगमा बाघको आहारा बन्दछ ।

**प्रक्षाल्य पादौ हस्तौ च मुखं चाद्भिः समाहितः ।**
**आचम्य प्राङ्मुखः पश्चात् दन्तधावनमाचरेत् ॥३४॥**

दुवै गोडा, दुवै हात र मुख पानीले राम्ररी पखाली पूर्वतिर फर्केर आचमन गरेपछि दाँत माझ्नू ।

**आयुर्बलं यशो वर्चः प्रजाः (प्रजां) पशुवसूनि च ।**
**ब्रह्म प्रज्ञां च मेधां च त्वं नो देहि वनस्पते ॥३५॥**



दाँत माझ्नुभन्दा पहिले “हे वनस्पति ! तिमी मलाई आयु, बल, कीर्ति, तेज, सन्तान सुख,
पशु, धन, ज्ञान र दिमागको ग्रहण गर्ने क्षमता प्रदान गर” भन्नू ।

**यस्तु गण्डूषसमये तर्जन्या वक्त्रशोधनम् ।**
**कुर्वीत यदि मूढात्मा नरके पतति द्विजः ॥३६॥**

मुख कुल्ला गर्दा जो मूर्ख द्विज चोर औंलो मुखभित्र छिराएर कुल्ला गर्दछ, उ नरकमा पर्दछ ।

**अलाभे दन्तकाष्ठानां प्रतिषिद्धदिनेष्वपि ।**
**अपां द्वादश(षोडश)गण्डूषैर्मुखशुद्धिर्भविष्यति ॥३७॥**

दतिवन गर्ने काठ नपाउँदा अथवा दाँत माझ्न नहुने दिनमा मुख शुद्धिका लागि पानीले
बाह्र (वा सोह्र) पटक मुख कुल्ला गर्नू, शुद्ध हुन्छ ।

**प्रतिपत्पर्वषष्ठीषु नवमी द्वादशी तथा ।**
**दन्तानां काष्ठसंयोगो(गे) दहत्यासप्तमं कुलम् ॥३८॥**

परेवा, पूर्णिमा, औंसी, षष्ठी, नवमी र द्वादशी तिथिमा दतिवन र
दाँतका संयोग गर्ने मानिसका सात कुल दग्ध हुन्छन् ।

**सुरया लिप्तदेहोऽपि प्रायश्चित्तीयते द्विजः ।**
**प्रातरभ्यक्तदेहस्य निष्कृतिर्न विधीयते ॥३९॥**

शरीर मदिराले लिप्त भएको द्विज पनि प्रायश्चित गर्नाले पापबाट छुट्दछ
तर बिहान शरीरमा तेल दल्ने द्विज पापबाट छुट्न सक्दैन ।

**तैलाभ्यङ्गं महाराज ब्राह्मणानां करोति यः ।**
**स स्नातोऽब्दशतं साङ्गं(साग्रं) गङ्गायां नात्र संशयः ॥४०॥**

हे महाराज ! जसले ब्राह्मणहरूलाई तेल लगाएर मालिश गरि दिन्छ उसले मानौ
सय वर्षसम्म पूरा शरीर गङ्गामा नुहाएको छ, यसमा कुनै शङ्का छैन ।

**द्रव्यान्तरयुतं तैलं न कदाचन दुष्यति ।**
**तैलमाज्येन संयुक्तं ग्रहणेऽपि न दुष्यति ॥४१॥**



कुनै अन्य द्रव्य (ओखती) मिसाइएको तेल कहिल्यै दूषित हुँदैन ।
घिउ मिसाइएको तेल त ग्रहण लाग्दा पनि दूषित हुँदैन ।

**छायामन्त्यश्वपाकानां स्पृष्ट्वा स्नानं समाचरेत् ।**
**चत्वारिंशत्पदादूर्ध्वं(दामूर्ध्वं) छायादोषो न विद्यते ॥४२॥**

अन्त्यज र श्वपाकको छाया छोइए पनि नुहाउनु पर्दछ । चालीस
पाइला हिँडेपछि छाया-दोष हुँदैन ।

**अस्पृश्यस्पर्शने चैव त्रयोदश निमज्ज्य च ।**
**आचम्य प्रयतः पश्चात्स्नानं विधिवदाचरेत् ॥४३॥**

छुन नहुनेलाई छोइए तेह्र पटक डुबुल्की लगाएर नुहाई
आचमन गरेर शुद्ध भई पुनः विधिवत् नुहाउनू ।

**ज्वराभिभूता या नारी रजसा च परिप्लुता ।**
**कथं तस्या भवेच्छौचं शुध्यते(शुध्यन्ते) केन कर्मणा ॥४४॥**

(ऋषिहरूले सोधे कि) जुन स्त्री जरोले ग्रस्त छे र रजस्वला भएकी छे, त्यसबेला उनको शुद्धि कसरी हुन्छ ? उनी के कर्म गर्नाले शुद्ध हुन सक्दछे ?

**चतुर्थेऽहनि सम्प्राप्ते स्पृशेदन्या तु तां (स्पृशेदन्याकृता) स्त्रियम् ।**
**सा सचेलावगाह्यापः(गाह्याथ) स्नात्वा स्नात्वा पुनः स्पृशेत् ॥४५॥**

(वाधूल मुनिले उत्तर दिनु भयो कि) चौथो दिन कुनै अर्की स्त्रीले उनलाई छुनू । त्यसपछि अर्की स्त्रीले सवस्त्र पानीमा डुबुल्की लगाएर नुहाउनू । फेरी नुहाउनू । अनि फेरी नुहाउनू । त्यसपछि पुनः रजस्वला स्त्रीलाई छुनू ।

**दश द्वादशकृत्वो वा ह्याचामेच्च पुनः पुनः ।**
**अन्ते च वाससां त्यागः ततः शुद्धा भवेत्तु सा ॥४६॥**

(यसरी) दश वा बाह्र पटक आचमन गराउँदै नुहाउन लगाई अन्तमा कपडा त्याग्न लगाउनू, तब उ शुद्ध हुन्छे ।

**दद्याच्छक्त्या ततो दानं पुण्याहेन विशुध्यति ॥४७॥**

यसपछि आफ्नो गच्छे अनुसार दान दिनू । पुण्यवाचनले उ पूर्णतः शुद्ध हुन्छे ।

**आर्तवाभिप्लुते नार्यौ सम्भाषेतां मिथो यदि ।**
**उपवासस्तयोराहुरशुद्धौ शुद्धिकारणम् ॥४८॥**

रजस्वला भएका दुई स्त्री एक आपसमा कुराकानी गर्दछन् भने यो अशुद्धिबाट शुद्ध हुन तिनले उपवास बस्नु पर्दछ ।

**शावे च सूतके चैव ह्यन्तरा चेदृतुर्भवेत् ।**
**अस्नात्वा भोजनं कुर्याद् भुक्त्वा चोपवसेद् गृहे ॥४९॥**

जुठो वा सूतकमा रजस्वला हुने स्त्रीले ननुहाई भोजन गर्नू र

खाना खाएपछि (कतै नगई) आफ्नै घरमा बस्नू ।

**उत्सवे वासुदेवस्य यः स्नाति स्पर्शशङ्कया ।**
**स्वर्गस्थाः पितरस्तस्य पतन्ति नरके क्षणात् ॥५०॥**

नारायणोत्सव वा कृष्णोत्सवमा छुन नहुनेलाई छोइएको आशङ्कामा जसले नुहाउँदछ, त्यसका स्वर्गमा रहेका पितृहरू त्यसै बखत नरकमा खस्दछन् । (अर्थात् यी उत्सवमा छुवाछुतको बारना हुँदैन)

**अस्पृश्यस्पर्शने वान्तावश्रुपाते क्षुरे भगे ।**
**स्नानं नैमित्तिकं ज्ञेयं देवर्षिपितृवर्जितम् ॥५१॥**

छुन नहुने छुँदा, बान्ता भएपछि, आँशु झारेपछि, कपाल खौरेपछि र योनिस्पर्श गरेपछि (सहवास पछि) नुहाउनु पर्दछ । यसलाई नैमित्तिक स्नान भनिन्छ । तर देवकर्म, ऋषिकर्म र पितृकर्ममा यो नियम लागु हुँदैन ।

**स्वर्धून्यम्भः समानि स्युः सर्वाण्यम्भांसि भूतले ।**

**कूपस्थान्यपि सोमार्कग्रहणे नात्र संशयः ॥५२॥**

सूर्य वा चन्द्रग्रहणमा पृथ्वीमा रहेका कुवा लगायत सबैतिरको जल गङ्गाजल समान हुन्छ, यसमा कुनै शङ्का छैन ।

**अश्रोत्रियः श्रोत्रियो वा कुपात्रं पात्रमेव वा ।**
**विप्रब्रुवो वा विप्रो वा ग्रहणे दानमर्हति ॥५३॥**

वेदवेदाङ्गको विद्वान होस् वा नहोस्, कुपात्र होस् वा सुपात्र, नाममात्रको ब्राह्मण होस् वा विद्वान ब्राह्मण : ग्रहणका बेलामा दान लिन योग्य हुन्छ ।

**सर्वं भूमिसमं दानं सर्वो ब्रह्मसमो द्विजः ।**
**सर्वं गङ्गासमं तोयं ग्रहणे चन्द्रसूर्ययोः ॥५४॥**

चन्द्र र सूर्यग्रहणमा सबै दान भूमिदान समान, सबै ब्राह्मण ब्रह्म समान र सबै जल गङ्गाजल समान हुन्छन् ।

**प्रातराचमनं कृत्पा शौचं कृत्वा यथाविधि ।**
**दन्तशौचं ततः कृत्वा प्रातःस्नानं समाचरेत् ॥५५॥**

बिहान आचमन गरी विधिपूर्वक शौच सकेर त्यसपछि
दाँत माझी अनि नुहाउनु पर्दछ ।

**द्वौ हस्तौ युग्मतः कृत्वा पूरयेदुदकाञ्जलिम् ।**
**गोश्रृङ्गमात्रमुद्धृत्य जलमध्ये जलं क्षिपेत् ॥५६॥**

दुवै हात जोडी अँजुली बनाएर त्यसभरी जल लिनू र गाईको सिङ जति
माथि उठाई जलका बीचमा जल फ्याल्नू ।

**येन तीर्थेन गृह्णीयात्तेन दद्याज्जलाञ्जलिम् ।**
**अन्य तीर्थेन गृह्णीयात्तत्तोयं रुधिरं भवेत् ॥५७॥**

हातको जुन तीर्थले जल उभाइएको हो त्यही तीर्थले जलाञ्जली दिनु पर्दछ । अन्य
तीर्थले ग्रहण गरिएको जल अन्य तीर्थले दिइए त्यो जल रगत समान हुन्छ ।



**पूर्वाशाभिमुखो देवानुत्तराभिमुखस्त्वृषीन् ।**
**पितॄँस्तु दक्षिणास्यस्तु जलमध्ये तु तर्पयेत् ॥५८॥**

पूर्वतिर फर्केर देवताहरूलाई, उत्तरतिर फर्केर ऋषिहरूलाई र
दक्षिणतिर फर्केर पितृहरूलाई तर्पण गर्नू ।

**स्नानार्थमभिगच्छन्तं देवाः पितृगणैः सह ।**
**वायुभूतास्तु गच्छन्ति तृषार्ताः सलिलार्थिनः ॥५९॥**

नुहाउन जान लागेका व्यक्ति सँगै तिर्खाएर पानी पिउन आतुर भएका
देवताहरू र पितृका गण वायु रूप लिएर सँगसँगै जान्छन् ।

**निराशास्ते निवर्तन्ते वस्त्रनिष्पीडने कृते ।**
**तस्मान्न पीडयेद् वस्त्रमकृत्वा पितृतर्पणम् ॥६०॥**

लुगा निचोरिए ती निराश भएर फर्कन्छन् । यसैले पितृ (आदि) लाई तर्पण नगरी वस्त्र ननिचोर्नू ।

**वस्त्रं चतुर्गुणीकृत्य निष्पीड्य च जलाद् बहिः ।**
**वामप्रकोष्ठे निक्षिप्य द्विराचम्य शुचिर्भवेत् ॥६१॥**

चिसा लुगालाई (पखालेर वा धोएर) चार पटक दोबारेर पानीभन्दा बाहिर निचोर्नू । अनि यी लुगालाई देब्रे हातको कुहिनो भन्दा मुनि पाखुरामा राखी दुई पटक आचमन गर्नू । मानिस पवित्र हुन्छ ।

**मनुष्यतर्पणे चैव स्नानवस्त्रनिपीडने ।**
**निवीती तु भवेद्विप्रस्तथा मूत्रपुरीषयोः ॥६२॥**

मानिसका लागि तर्पण गर्दा, नुहाउँदा भिजेका कपडा निचोर्दा तथा दिसापिसाब गर्दा ब्राह्मणले जनैलाई माला लगाएर जसरी लगाउनू ।

**नदीषु देवखातेषु गिरिप्रस्रवणेषु च ।**

**स्नानं प्रतिदिनं कुर्यात् सर्वकर्मप्रसिद्धये ॥६३॥**

नदीहरू, प्राकृतिक तालहरू र पहाडका झर्नाहरूमा सबै कर्म सफलताका लागि दिनहुँ गएर नुहाउने गर्नू ।

**परकीयनिपानेषु न स्नानाद्वै कदाचन ।**
**स्नात्वा निपानकर्तुस्तु दुष्कृतांशेन लिप्यते ॥६४॥**

अर्काले बनाएका कुवा, ताल, आदिजस्ता जलाशयमा गएर कहिल्यै ननुहाउनू । नुहाए बनाउनेले गरेको दुष्कर्मको भागिदार हुन पुग्दछ ।

**अन्यायोपात्तवित्तस्य पतितस्य च वार्धुषेः ।**
**तत्र स्नात्वा च पीत्वा च प्राजापत्यं समाचरेत् ॥६५॥**

अन्यायपूर्वक कमाइएको धन, पतितको धन र ब्याजखोरको धन लगाएर बनाइएको यस्तो जलाशयमा नुहाए वा यस्तो जलायशको पानी पिए प्राजापत्य व्रत गर्नू ।

**अन्त्यजैः खातिताः कूपास्तटाका वाप्य एव च ।**
**तत्र स्नात्वा च पीत्वा च प्रायश्चित्तं न विद्यते ॥६६॥**

अन्त्यजको धनले खनिएका कुवा, तलाउ र वापीमा नुहाए वा
त्यसको पानी पिए, कुनै प्रायश्चित छैन ।

**परकीयनिपानेषु यदि स्नायात्कथञ्चन ।**
**सप्त पिण्डान् समुद्धृत्य तत्र स्नानं समाचरेत् ॥६७॥**

अरुले खनेका जलाशयमा नुहाउनु नै परे त्यस जलाशय भित्रबाट
सात डल्ला माटो बाहिर निकाली अनि नुहाउनू ।

**लालास्वेदसमाकीर्णः शयनातुत्थितः पुमान् ।**
**अशुचिं तं विजानीयादनर्हः सर्वकर्मसु ॥६८॥**

र्‍याल र पसिनाले ओतप्रोत भई सुतेर उठेको व्यक्ति अपवित्र हुन्छ,
उ सबै कामका लागि अयोग्य हुन्छ ।



**स्नानमूलाः क्रियाः सर्वाः सन्ध्योपासनमेव च ।**
**स्नानाचारविहीनस्य सर्वाः स्युर्निष्फलाः क्रियाः ॥६९॥**

सबै धर्मकर्म, सन्ध्यावन्दन तथा उपासना स्नानमूलक (स्नान गरेर मात्र शुरु गरिने) हुन्छन्,
यसैले ननुहाउने व्यक्तिका लागि (यी) सबैकर्म निष्फल हुन्छन् ।

**उपव्युषसि यत्स्नानं सन्ध्यायामुदितेऽपि वा ।**
**प्राजापत्येन तत्तुल्यं महापातकनाशनम् ॥७०॥**

मिरमिरे बिहानीमा, सन्ध्याकालमा र सूर्य उदाएपछि नै भएपनि गरिने स्नान
प्राजापत्य व्रत समान ठूला पाप नाशक हुन्छ ।

**स्नानवस्त्रेण यः कुर्याद् देहस्य परिमार्जनम् ।**
**शुनालीढं भवेद्गात्रं पुनः स्नानेन शुध्यति ॥७१॥**

जसले नुहाउँदा लगाएका चिसा लुगाले शरीर माड्दछ त्यसको कुकुरले चाटे सरह अपवित्र हुन्छ । यसैले उसले शुद्धिका लागि पुनः नुहाउनु पर्दछ ।

**उषःकाले भानुवारे यो नर स्नानमाचरेत् ।**
**माघस्नानसहस्राणि गङ्गायमुनसङ्गमे ॥७२॥**

आइतबारको मिरमिरे बिहानीमा जो मानिस नुहाउँदछ उसले गङ्गा र यमुनाको दोभानमा हजारौँ माघ महिनामा नुहाए सरहको फल प्राप्त गर्दछ ।

**जन्मर्क्षे वैधृते पुष्ये व्यतीपाते च सङ्क्रमे ।**
**अमायां च नदीस्नानं कुलकोटिं समुद्धरेत् ॥७३॥**

जन्मनक्षत्रमा, वैधृति योगमा, पुष्य नक्षत्रमा, व्यतीपात योगमा, सङ्क्रान्तिमा र औँसीमा गरिने नदीको स्नानले करोडौँ कुलको उद्धार गर्दछ ।

**अकृत्यमपि कुर्वाणो भुञ्जानोऽपि यतस्ततः ।**
**कदाचिन्नारकं दुःखं प्रातःस्नायी न पश्यति ॥७४॥**



कुकर्म गरिरहँदा वा जता मन लाग्यो त्यता खाने हुँदा पनि नित्य नुहाउने मानिसले कहिल्यै नारकीय दुःख देख्न पर्दैन ।

**विना स्नानेन यो भुङ्क्ते स मलाशी न संशयः ।**
**अस्नाताशी मलं भुङ्क्ते ह्यजप पूयशोणितम् ॥७५॥**

ननुहाई खाना खाने मानिस मल खाने मानिस हुन्छ, यसमा कुनै शङ्का छैन । ननुहाई खाना खानेले मल खान्छ भने जप नगरी खाना खानेले पीप र रगत खान्छ ।

**अहुताशी कृमिं भुङ्क्ते ह्यदाता विषमश्नुते ॥७६॥**

होम नहाली खाना खानु कीरा खानु समान हुन्छ भने अरुलाई नखुवाई खाना खानु विष खानु समान हुन्छ ।

**सङ्कल्पसूक्तपठनं मार्जनं चाघमर्षणम् ।**
**देवर्षितर्पणञ्चैव स्नानं पञ्चागमिष्यते ॥७७॥**

सङ्कल्प, सूक्तपाठ, मार्जन, अघमर्षण, जप र देवता तथा ऋषिहरूलाई तर्पण गरी स्नानका पाँच अङ्ग हुन्छन् ।

**हिरण्यश्रृङ्गमित्युक्त्वा जलं समवगाहयेत् ।**
**सुमित्रा इत्युदाहृत्य स्वात्मानमभिषेचयेत् ॥७८॥**

"हिरण्यश्रृङ्ग..." मन्त्र पढ्दै पानीमा प्रवेश गर्नू र "सुमित्रा..." मन्त्र पढ्दै आफ्नो शरीरमा जल छचाप्नू ।

मन्त्र १ : ॐ हिरण्यश्रृङ्गं वरुणं प्रपद्ये तीर्थं मे देहि याचितः ॥
यन्मया भुक्तमसाधूनां पापेभ्यश्च प्रतिग्रहः ॥
(तैत्तिरीय आरण्यक, १०।१।७४)

मन्त्र २ : ॐ सुमित्रा न आप ओषधयः सन्तु ॥
(तैत्तिरीय संहिता : १।४।४५।७, तैत्तिरीय आरण्यक : १०।१।७०)



**दुर्मित्रा इत्युदाहृत्य मृत्स्थाने जलमुत्सृजेत् ।**
**योऽस्मान्द्वेष्टीत्युदाहृत्य तथा तत्र जलं क्षिपेत् ॥७९॥**

"दुर्मित्रा..." मन्त्र पढ्दै माटोमा जल चढाउनू । "योऽस्माने द्वेष्टि..." मन्त्र पढ्दै पुनः त्यही स्थानमा जल चढाउनू ।

मन्त्र ३ : ॐ दुर्मित्रास्तस्मै भूयासुर्योऽस्मान् द्वेष्टि ॥
(तैत्तिरीय संहिता : १।४।४५।७, तैत्तिरीय आरण्यक : १०।१।७०)

मन्त्र ४ : ॐ योऽस्मान् द्वेष्टि ॥
(तैत्तिरीय संहिता : १।४।४५।७, तैत्तिरीय आरण्यक : १०।१।७०)

**यं च वयं द्विष्म इति पुनस्तत्र जलं क्षिपेत् ।**
**एवं त्रिर्मृत्तिकास्थाने जलमञ्जलिनोत्सृजेत् ॥८०॥**

"यं च वयं द्विष्म.." मन्त्र पढ्दै पुनः त्यहाँ जल चढाउनू । यसरी तीन पटक गरी माटोमा तीन अँजुली जल चढाउनू ।

मन्त्र ५ : ॐ यं च वयं द्विष्मः ॥
(तैत्तिरीय संहिता : १।४।४५।७, तैत्तिरीय आरण्यक : १०।१।७०)

**नमोऽग्नयेति मन्त्रेण नमस्कृर्याज्जलं ततः ।**
**यदपामित्यमेध्यांशं निरस्येद् दक्षिणे जलम् ॥८१॥**

त्यसपछि "नमोऽग्नये.." मन्त्र पढी जललाई नमस्कार गर्नू ।
अनि "यदपाम्..." मन्त्र पढी अशुद्ध जललाई दक्षिणतिर फ्याँक्नू ।

मन्त्र ६ : ॐ नमोऽग्नयेऽप्सुमते नम इन्द्राय ।
नमो वरुणाय नमो वारुण्यै नमोऽद्भ्यः ॥
(तैत्तिरीय आरण्यक : १०।१।७६)
मन्त्र ७ : ॐ यदपां क्रूरं यदमेध्यं यदशान्तं तदपगच्छतात् ॥
(तैत्तिरीय आरण्यक : १०।१।७७)

**अत्याशनादिति द्वाभ्यां त्रिरालोड्य तु पाणिना ।**
**चतुरस्रं तीर्थपीठं पाणिनोल्लिख्य वारिषु ॥८२॥**
**नन्दिनीत्यादिनामानि बद्धाञ्जलिपुटो भवेत् ॥८३॥**



यसपछि "अत्याशनात्..." यी (तल उल्लेखित) दुई मन्त्रले जललाई चलाएर, हातैले जलमा चार कुने तीर्थपीठ बनाई नन्दिनी नाम पनि जलमा लेखेर हात जोड्नू र...।

मन्त्र ८ : ॐ अत्याशनादतीपानाद्यच्च उग्रात्प्रतिग्रहात् ।
तन्नो वरुणो राजा पाणिना ह्यवमर्शतु ॥
(तैत्तिरीय आरण्यक : १०।१।७८)
मन्त्र ९ : ॐ सोऽहमपापो विरजो निर्मुक्तो मुक्तकिल्बिषः ।
नाकस्य पृष्ठमारुह्य गच्छेद् ब्रह्मसलोकताम् ॥
(तैत्तिरीय आरण्यक : १०।१।७९)

**आवाहयामि त्वां देवि स्नानार्थमिह सुन्दरि ।**
**एहि गङ्गे नमस्तुभ्यं सर्वतीर्थसमन्विते ॥८४॥**

"हे देवि ! हे सुन्दरि ! नुहाउनका लागि म हजुरलाई यहाँ आवाहन गर्दछु । हे सर्वतीर्थमयी गङ्गा ! यहाँ आउनु होस्, हजुरलाई नमस्कार छ" भन्नू ।

**इमं मे गङ्गे इत्युक्त्वा पुण्यतीर्थानि च स्मरेत् ।**
**आपो अस्माने इत्यृचमुक्त्वा मज्जनमाचरेत् ॥८५॥**

"इमं मे गङ्गे.." मन्त्र पढ्दै पुण्य तीर्थलाई सम्झी "आपो अस्मान्..." मन्त्र पढी नुहाउनू ।

मन्त्र १० : ॐ इमं मे गङ्गे यमुने सरस्वति शुतद्रि स्तोमं सचता परुष्णिया ।
असिक्निया मरुद्वृधे वितस्तयाऽऽर्जिकीये श्रृणुह्या सुषोमया ॥
(तैत्तिरीय आरण्यक : १०।१।८१)

मन्त्र ११ : ॐ आपो अस्मान् मातरः शुन्धन्तु । घृतेन नो घृतपुवः पुनन्तु ।
विश्वमस्मत्प्रवहन्तु रिप्रम् ॥
(तैत्तिरीय संहिता : १।२।१।६)

**आपो हिष्ठादिभिर्मन्त्रैरात्मानं प्रोक्ष्य वारिभिः ।**
**ततो नारायणं स्मृत्वा प्रजपेदघमर्षणम् ॥८६॥**

"आपो हि ष्ठा.." आदि तीन मन्त्र पढी जल आफ्नो शरीरमा छर्कनू । त्यसपछि नारायणलाई सम्झँदै अघमर्षण सूक्त पाठ गर्नू ।



मन्त्र १२ : ॐ आपो हि ष्ठा मयोभुवस्ता न ऊर्जे दधातन महे रणाय चक्षसे ॥
मन्त्र १३ : ॐ यो वः शिवतमो रसस्तस्य भाजयतेह नः । उशतीरिव मातरः ॥
मन्त्र १४ : ॐ तस्मा अरङ्गमाम वो यस्य क्षयाय जिन्वथ । आपो जन यथा च न : ॥
(तैत्तिरीय संहिता : ४।१।५।२-४, तैत्तिरीय आरण्यक : १०।१।७१-७३)

**अघमर्षणसूक्तस्य ऋषिरेवाघमर्षणः ।**
**छन्दोऽनुष्टुप्तथा देवो भाववृत्तोऽधिदेवता ॥८७॥**

अघमर्षणकासूक्तका ऋषि अघमर्षण नै हुन् । यसको छन्द अनुष्टुप् र देवता भाववृत हुन् । (यो ऋग्वेदको दशम मण्डलको १९० औं सूक्त हो) ।

मन्त्र १५ : ॐ ऋतञ्च सत्यञ्चाभीद्धात्तपसोऽध्यजायत ।
ततो रात्र्यजायत ततः समुद्रो अर्णवः ॥
ॐ समुद्रादर्णवादधि संवत्सरो अजायत ।
अहोरात्राणि विदधद्विश्वस्य मिषतो वशी ॥
ॐ सूर्याचन्द्रमसौ धाता यथा पूर्वमकल्पयत् ।
दिवञ्च पृथिवीं चान्तरिक्षमथो स्वः ॥

**त्रिवारमष्टवारं वा निमज्ज्यान्तर्जले जपेत् ।**
**"एष भूतस्य..." मन्त्रेण पुनः प्रोक्षणमाचरेत् ॥८८॥**

जलमा डुबुल्की लगाएर ती वा आठ पटक यो (अघमर्षण) सूक्त जप गरेपछि पुनः "एष भूतस्य.." मन्त्रले जल शरीरमा छयाप्नू ।

मन्त्र १६ : ॐ पुनन्तु वसवः पुनातु वरुणः पुनात्वघमर्षणः ।
एष भूतस्य मध्ये भुवनस्य गोप्ता ॥
(तैत्तिरीय आरण्यक : १०।१।८६)

**"आर्द्रं ज्वलति" मन्त्रेण प्रविशेन्मन्त्रितं जलम् ।**
**अकार्यकार्य मन्त्रं तु पुनर्मज्जञ्जले जपेत् ॥८९॥**

यसपछि "आर्द्रं ज्वलति..." मन्त्रले अभिमन्त्रित जलले आचमन गर्नू अनि "अकार्यकार्य.." मन्त्रले पुनः डुबुल्की लगाएर जलमा जप गर्नू ।



मन्त्र १७ : ॐ आर्द्रं ज्वलति ज्योतिरहमस्मि ।
ज्योतिर्ज्वलति ब्रह्माहमस्मि ।
योऽहमस्मि ब्रह्माहमस्मि ।
अहमस्मि ब्रह्माहमस्मि ।
अममेवाहं मां जुहोमि ॥
(तैत्तिरीय आरण्यक : १०।१।८८)

मन्त्र १८ : ॐ अकार्यकार्यवकीर्णी स्तेनो भ्रूणहा गुरुतल्पगः ।
वरुणोऽपामघमर्षणस्तस्मात्पापात्प्रमुच्यते ॥
(तैत्तिरीय आरण्यक : १०।१।८९)

**तद्विष्णोरिति मन्त्रेण मज्जेदप्सु पुनः पुनः ।**
**गायत्री वैष्णवी ह्येषा विष्णोः संस्मरणाय वै ॥९०॥**

यसपछि "तद्विष्णोः.." मन्त्र पढ्दै जलमा पटकपटक डुबुल्की लगाउनू । यही वैष्णवी गायत्री मन्त्र विष्णुको संस्मरणका लागि हुने गर्दछ ।

मन्त्र १९ : ॐ तद्विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः ।
दिवीव चक्षुराततम् ॥
(तैत्तिरीय संहिता : १।३।६।२)

**प्रतिगृह्याप्रतिग्राह्यं भुक्त्वा चाभक्ष्यभक्षणम् ।**
**तद्विष्णोरित्यपां मध्ये सकृज्जप्त्वा विशुध्यति ॥९१॥**

लिन नहुने कुरा लिँदा, खान नहुने कुरा खाँदा (जुन पाप हुन्छ) पानी भित्र बसेर गरिने "तद्विष्णोः..." मन्त्रको एक पटकको जपले त्यो पाप शुद्ध हुन्छ ।

**उत्तीर्य च द्विराचम्य देवादींस्तर्पयेत्ततः ।**
**ऊर्जं वहन्तीरिति च तृप्यतेति स्थले क्षिपेत् ॥९२॥**

यसपछि जलबाट बाहिर निस्की दुई पटक आचमन गर्नू र देवता आदिलाई तर्पण गर्नू । अनि "ऊर्जं वहन्तीः..." र "तृप्यत.." मन्त्रले जमिनमा जल खसाल्नू ।

मन्त्र २० : ॐ ऊर्जं वहन्तीरमृतं घृतं पयः कीलालं परिश्रुतम् ।
स्वधा स्था तर्पयत मे पितॄन् ॥
(वाजसनेय संहिता : २।३४)
मन्त्र २१ : ॐ तृप्यत तृप्यत तृप्यत ॥
(आपस्तम्बमन्त्रपाठ : २।२०।२३)



**स्नानवस्त्रेण हस्तेन यो द्विजोऽङ्गं प्रमार्जति ।**
**वृथा भवति तत्स्नानं पुनः स्नानेन शुध्यति ॥९३॥**

जो द्विज नुहाएका लुगाले वा हातले आफ्ना अङ्ग माड्दछ, उसले स्नान गरेको व्यर्थ हुन्छ । उ फेरी नुहाएपछि मात्र शुद्ध हुन्छ ।

**मार्जयेद्वस्त्रशेषेण नोत्तरीयेण वा शिरः ।**
**न च निर्धुनुयात्केशान् न तिष्ठन् परिमार्जयेत् ॥९४॥**

उत्तरीय वस्त्र बाहेकका अन्य बाँकी वस्त्रले टाउको माड्नू । कपाल नफ्ट्कार्नू । उभिएर शरीर नमाड्नू ।

**स्नानं कृत्वार्द्रवस्त्रं तु ऊर्ध्वमुत्तारयेद् द्विजः ।**
**स्नानवस्त्रमधस्ताच्चेत्पुनः स्नानेन शुध्यति ॥९५॥**

नुहाएपछि भिजेका लुगा माथितिरबाट निकाल्नू । तलबाट निकाले नुहाएपछि शुद्ध हुन्छ ।

**प्रातः सन्ध्यामुपासीत वस्त्रसंशोधपूर्विकाम् ।**
**उपास्य मध्यमां सन्ध्यां वस्त्रनिष्पीडनं परम् ॥९६॥**

बिहानको सन्ध्यावन्दन पहिला कपडा धोएर गर्नु पर्दछ । मध्याह्नको
सन्ध्यावन्दन गरेपछि कपडा निचोर्नु पर्दछ ।

**स्नानमूलाः क्रियाः सर्वाः सन्ध्योपासनमेव च ।**
**तस्मात्सर्वप्रयत्नेन स्नानं कुर्यादतन्द्रितः ॥९७॥**

सबै धर्मकर्म, सन्ध्यावन्दन र उपासनाको आधार स्नान हो । यसैले सबै
खालका प्रयाश गरी उन्मत्त नभई अल्छी नगरी नुहाउने गर्नू ।

**प्रातरुत्थाय यो विप्रः प्रातःस्नायी सदा भवेत् ।**
**सर्वपापविनिर्मुक्तः परं ब्रह्माधिगच्छति ॥९८॥**



बिहान उठेर दिनहुँ नुहाउने ब्राह्मण सबै पापबाट मुक्त भई मोक्ष हुन्छ ।

**अन्तराच्छाद्य कौपीनं वाससी परिधाय च ।**
**उत्तरीयं सदाऽऽदद्यात् तद्विना नाचरेत्क्रियाः ॥९९॥**

भित्र लगौंटी लगाई दुई वटा वस्त्र लगाएर सधैं उत्तरीय वस्त्र धारण गर्नू ।
यसो नगरी कुनै पनि (धार्मिक) कार्य नगर्नू ।

**यज्ञोपवीतवद् धार्यमुत्तरीयं सदा बुधैः ।**
**वन्दने तर्पणे चैव कटद्यामेव च धारयेत् ॥१००॥**

विद्वानहरूले सधैं जनै लगाए जसरी (बायाँ काध माथिबाट दाहिने हातको मुनिसम्म पुग्ने गरी)
उत्तरीय वस्त्र लगाउनु पर्दछ भनेका छन् । सन्ध्यावन्दन र तर्पण गर्दा भने
यसलाई कम्मरमा मात्र बाँध्नू ।

**मुखजानामूर्ध्वपुण्ड्रं तिलकं बाहुजन्मनाम् ।**

**पदाकारमूरुजानां त्रिपुण्ड्रं पादजन्मनाम् ॥१०१॥**

ब्राह्मणका लागि ऊर्ध्व पुण्ड्र, क्षत्रियका लागि तिलक, वैश्यका लागि पदाकार र शूद्रका लागि त्रिपुण्ड्र लगाउने विधान छ ।

नोट : (१) ऊर्ध्वपुण्ड्र : निधारमा लगाइने चन्दन आदिको ठाडो टीका । (२) तिलक : टीका । (३) पदाकारः पाइला जस्तो टीका । (४) त्रिपुण्ड्र : गुइँठाको खरानीद्वारा माझी र साहिँली औंलाले बायाँबाट दायाँतिर र बूढी औंलाले दाहिनेबाट देब्रेतिर निधारमा लगाइने टीका ।

**धृतोर्ध्वपुण्ड्रः परमीशितारं विष्णुं परं ध्यायति यो महात्मा ।**
**स्वरेण मन्त्रेण सदा हृदिस्थितं परात्परं यन्महतो महान्तम् ॥१०२॥**

जुन महात्मा ऊर्ध्वपुण्ड्र लगाएर महास्वामी, सदा हृदयमा बस्ने ठूलाभन्दा पनि ठूला एवं परभन्दा पनि पर अर्थात् अन्तिम बिन्दुमा रहेका भगवान् श्रीविष्णुलाई स्वर र मन्त्रले ध्यान गर्दछ (उ मोक्ष हुन्छ) ।

**महोपनिषदि प्रोक्तमूर्ध्वपुण्ड्रं वरं शुभम् ॥१०३॥**

महोपनिषद्ले ऊर्ध्वपुण्ड्रलाई श्रेष्ठ र शुभ भनी बताएको छ ।

**धृतोर्ध्वपुण्ड्रः करचक्रधारि नारायणं साङ्ख्ययोगाधिगम्यम् ।**
**ज्ञात्वा विमुच्येत नरः समस्तैः संसारपाशैरिह चैति विष्णुम् ॥१०४॥**

ऊर्ध्वपुण्ड्र लगाई जो मानिसले हातमा चक्र लिएका तथा साङ्ख्ययोगका माध्यमबाट थाहा पाउन योग्य नारायणको रहस्य थाहा पाउँदछ उ सारा सांसारिक बन्धनबाट मुक्त भई श्रीविष्णु भगवान्लाई पाउन सक्षम हुन्छ ।

**अथर्वशिरसि प्रोक्तमूर्ध्वपुण्ड्रविधिं द्विजाः ।**
**प्रवक्ष्यामि हितार्थं वो भवपापप्रणाशनम् ॥१०५॥**
**हरेः पादाकृतिं रम्यमात्मनश्च हिताय वै ॥१०६॥**

हे द्विजगण ! अथर्वशिरष्मा सांसारिक पाप नाश गर्ने भएको ऊर्ध्वपुण्ड्र लगाउने जुन् विधि बताइएको छ, म हजुरहरूका भलाईका लागि त्यो विधि बताउँदछु । अनि हजुरहरूकै

कल्याणका लागि विष्णु भगवान्‌को चरणाकृतिका बारेमा पनि बताउनेछु ।

**नोट :** **अथर्वशिरष् : (१) अथर्वोपनिषद्, (२) एक पाशुपत उपनिषद्, (३) पाञ्चायन पूजाका देवताका बारेका लिखित पाँच प्रकरणसहितको स्मार्त उपनिषद् ।**

**मध्येच्छिद्रमूर्ध्वपुण्ड्रं यो धारयति सर्वदा ।**
**स परस्य प्रियो नित्यं पुण्यभाङ् मुक्तिभाग्भवेत् ॥१०७॥**

जसले बीचमा प्वाल भएको उर्ध्वपुण्ड्र सधैं लगाउँदछ उ विष्णु भगवान्‌को अति नै प्रिय भई सधैं पुण्य र मोक्षका लागि भागिदार हुन्छ ।

**चतुरङ्गुलमूर्धाग्रं द्व्यङ्गुलं विस्मृतं मृदा ।**
**द्विजः पुण्ड्रमृजुं सौम्यं सान्तरालं तु धारयेत् ॥१०८॥**

टुप्पोतिर चार अमल भएको मूलमा दुई अमल माटो (भस्म) दलिएको सरल, सुन्दर र अन्तरयुक्त पुण्ड्रलाई द्विजले लगाउने गर्नू ।



**ऊर्ध्वगत्यां तु यस्येच्छा तस्योर्ध्वं पुण्ड्रमुच्यते ।**
**ऊर्ध्वं गत्वा स देवत्वं सम्प्राप्नोति न संशयः ॥१०९॥**

जसलाई मोक्षको चाहना छ उसका लागि उर्ध्वपुण्ड्र लगाउनु भनिएको छ । माथि गएपछि उसले देवत्व प्राप्त गर्दछ, यसमा कुनै शङ्का छैन ।

**पर्वताग्रे नदीतीरे विष्णुक्षेत्रे विशेषतः ।**
**सिन्धुतीरेऽथ वल्मीके तुलसीमूलमाश्रिते ॥११०॥**
**मृद एतास्तु सङ्ग्राह्या वर्ज्या अन्याश्च मृत्तिकाः ॥१११॥**

पहाडका अगिल्तिरको, नदीका किनारको, विशष गरी विष्णुक्षेत्रको, सिन्धुनदीको किनाराको धमिराको गोलाको र तुलसीको जरामा रहेको माटो यस्तो टीका लगाउन उपयुक्त हुन्छ, यस बाहेकका स्थानको माटो लगाउन हुँदैन ।

**श्यामं शान्तिकरं प्रोक्तं रक्तं वश्यकरं भवेत् ।**
**श्रीकरं पीतमित्याहुर्मोक्षदं श्वेतमुच्यते ॥११२॥**

कालो पुण्ड्र शान्ति प्रदायक, रातो वशमा राख्ने, पहेँलो श्री बढाउने र सेतो मोक्षदायक हुन्छ भनिन्छ ।

**अङ्गुष्ठः पुष्टिदः प्रोक्तो मध्यमायुष्करी भवेत् ।**
**अनामिकाऽनन्दा नित्यं तर्जनी भुक्तिमुक्तिदा ॥११३॥**

बूढी औँलो पुष्टिदायक, माझि औँलो आयुदायक, साहिँली औँलो अन्नदायक र चोर औँलो भोग एवं मोक्षदायक हुन्छ ।

**अभिषिक्तं तु यच्चूर्णं विष्णुबिम्बे तु यो नरः ।**
**हारिद्रां धारयेन्नित्यं सोऽश्वमेधफलं लभेत् ॥११४॥**

विष्णुको बिम्बले सेचन गरिएको धूलो र बेसार जसले सधैँ लगाउँदछ, उसले अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछ ।

**अनागतां तु ये पूर्वामनतीतां तु पश्चिमाम् ।**
**सन्ध्यां नोपासते विप्राः कथं ते ब्राह्मणाः स्मृताः ॥११५॥**

सूर्योदय हुनुभन्दा पहिले बिहानको र सूर्य अस्ताउनु भन्दा पहिले साँझको सन्ध्यावन्दन नगर्ने ब्राह्मणलाई कसरी ब्राह्मण भन्नु ?

**यावन्तोऽस्यां पृथिव्यां तु विकर्मस्था द्विजातयः ।**
**तेषां हि पावनार्थाय सन्ध्या सृष्टा स्वयम्भुवा ॥११६॥**

पृथ्वीमा जतिपनि गर्न नहुने वा निषेधित काममा लागेका द्विज छन् ती सबैलाई पवित्र गर्न भनेर नै ब्रह्माले सन्ध्याको सृष्टि गर्नु भएको हो ।

**गायत्री नाम पूर्वाह्णे सावित्री मध्यमे दिने ।**
**सरस्वती च सायाह्ने सैव सन्ध्या त्रिधा स्मृता ॥११७॥**

पूर्वाह्णमा गायत्री नामले, मध्याह्नमा सावित्री नामले र साँझमा सरस्वती नामले सन्ध्या तीन प्रकारकी हुन्छिन् भनी बताइएको छ ।

**प्रतिग्रहादन्नदोषात्पातकादुपपातकात् ।**
**गायत्री प्रोच्यते तस्माद् गायन्तं त्रायते यतः ॥११८॥**

दान लिनाले हुने दोष, अन्नजन्य दोष, पाप र उप-पापबाट स्तुति गर्ने व्यक्तिलाई रक्षा गर्दछिन्, त्यसैले यिनलाई गायत्री भन्ने गरिन्छ ।

**सवितृद्योतनाच्चैव सावित्री परिकीर्तिता ।**
**जगतः प्रसवित्री सा वाग्रूपत्वात्सरस्वती ॥११९॥**

सूर्यलाई प्रकाशित गर्ने अथवा सूर्यबाट प्रकाशित हुने कारणले गर्दा यिनलाई सावित्री भनिन्छ । संसारलाई बोलीका रूप (माध्यम) बाट सृष्टि गर्ने भएकी हुनाले यिनलाई सरस्वती भनिन्छ ।

**“आपो हि ष्ठे..”त्यृचा कुर्यान्मार्जनं तु कुशोदकैः ।**
**प्रतिप्रणवसंयुक्तं क्षिपेद्वारि पदे पदे ॥१२०॥**

“आपो हि ष्ठा..” यो मन्त्रले कुशपानीले मार्जन गर्नू । मन्त्रको हरेक पदका अगाडि ॐ भन्दै शरीरमा जल छयाप्नू । (माथि उल्लेखित मन्त्र १२) ।

**विप्रुषोऽष्टौ क्षिपेदूर्ध्वमधो “यस्य क्षयाय..” च ।**
**सम्वत्सरकृतं पापं मार्जनान्ते विनश्यति ॥१२१॥**

ब्राह्मण आठ पटक जलका थोपा माथितिर र “यस्य क्षयाय..” मन्त्र पढ्दै तलतिर जल छर्कनू । एक वर्षसम्म गरिएका पाप मार्जनको अन्तमा नष्ट हुन्छन् । (माथि उल्लेखित मन्त्र १४)

**रजस्तमोमोहजाताञ्जाग्रत्स्वप्नसुषुप्तिजान् ।**
**वाङ्मनःकायजान् दोषान्नवैतान्नवभिर्दहेत् ॥१२२॥**

रजत, तम र मोहजन्य; बिउँझिएका बेलामा, सपनामा र सुतेका बेलामा तथा मन, वचन र कर्मजन्य नौ दोष नौ मन्त्रले डढाउँदछन् ।

**नवप्रणवयुक्तेन “आपो हि ष्ठा..” तृचेन च ।**
**सम्वत्सरकृतं पापं मार्जनान्ते विनश्यति ॥१२३॥**

नौ ॐ ले युक्त “आपो हि ष्ठा..” आदि तीन मन्त्रले वर्षभरी गरिएका पाप नष्ट हुन्छन् । (माथि उल्लेखित मन्त्र १२)

**ऋगन्ते मार्जनं कुर्यात्पादान्ते वा समाहितः ।**
**तृचस्यान्तेऽथवा कुर्याच्छिष्टानां मतमीदृशम् ॥१२४॥**

ऋग्, पाद र ऋचका अन्तमा संयमित मनले मार्जन गर्नू-यस्तो श्रेष्ठ जनको मत छ ।

**पश्चादुभाम्यां हस्ताभ्यां परिषिच्य यथाक्रमम् ।**
**“सूर्यश्चे”ति जलं पित्वा “दधिक्राब्णे”ति मार्जयेत् ॥१२५॥**

यसपछि दुवै हातले क्रमैसँग सेचन गरी “सूर्यश्च..” यो मन्त्रले पानी पिई “दधिक्राब्णा..” यो मन्त्रले मार्जन गर्नू ।

मन्त्र २२ : ॐ सूर्यश्च मा मन्युश्च मन्युपतयश्च मन्युकृतेभ्यः । पापेभ्यो रक्षन्ताम् । यद्रात्रिया पापमकार्षं मनसा वाचा हस्ताभ्यां पद्भ्यामुदरेण शिश्ना रात्रिस्तदवलुम्पतु । यत्किञ्च दुरितं मयि इदमहं माममृतयोनौ सूर्ये ज्योतिषि जुहोमि स्वाहा ॥
(तैत्तिरीय आरण्यक : १०।३२।१)



मन्त्र २३ : ॐ दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः
सुरभि नो मुखा करत् प्रण आयूंषि तारिषत् ॥
(तैत्तिरीय संहिता : १।५।११।११)

**पश्चादुभाम्यां हस्ताभ्यामादायापः समाहितः ।**
**रवेरन्तर्मुखस्तिष्ठन् सप्तव्याहृतिपूर्वया ॥१२६॥**
**गायत्र्या चाभिमन्त्र्यापो निक्षिपेद् द्विजसत्तमः ॥१२७॥**

यसपछि श्रेष्ठ ब्राह्मणले दुवै हातमा जल लिई संयमित मनले सूर्यतिर मुख फर्काई उभिएर सात व्याहृति सहित गायत्री मन्त्रले जललाई अभिमन्त्रित गरी जल छाडिदिनू ।

**तिष्ठन् पादौ समौ कृत्वा जलेनाञ्जलिपूरणम् ।**
**गोश्रृङ्गमात्रमुद्धृत्य जलमध्ये जलङ्क्षिपेत् ॥१२८॥**

यसपछि दुवै गोडा जोडी अँजुलीमा जल लिएर गोश्रृङ्ग जति माथि उठाएर जलमाथि जल छाडिदिनू ।

**सायङ्काले तु यो विप्रो जले त्वर्घ्यं विनिक्षिपेत् ।**
**स मूढो नरकं याति यावदाभूतसंप्लवम् ॥१२९॥**

साँझमा जुन विप्रले जलमा अर्घ्य दिन्छ, त्यो मूर्ख पञ्चमहाभूत ननासिँदासम्म नरकमा पर्दछ ।

**यत्र सन्ध्यां प्रकुर्वीत तत्रैव जपमाचरेत् ।**
**अन्यत्र तु जपं कुर्वन् पुनः सन्ध्यां समाचरेत् ॥१३०॥**

जहाँ बसेर सन्ध्यावन्दन गरिन्छ जप पनि त्यहीँ गर्नु पर्दछ । जप अन्तै
बसेर गरे सन्ध्यावन्दन पुनः गर्नू ।

**वेदोदितानां नित्यानां कर्मणां समतिक्रमे ।**
**स्नातकव्रतलोपे च दिनमेकमभोजनम् ॥१३१॥**

वेदमा बताइएका नित्य कर्म गर्न छुटेमा अथवा स्नातकका व्रत टुटेमा एक दिन उपवास बस्नू ।



**अर्घ्यप्रदानतः पूर्वमुदयास्तमये सति ।**
**गायत्र्यष्टशतं जप्यं प्रायश्चित्तं द्विजातिभिः ॥१३२॥**

द्विजातिबाट प्रायश्चितका लागि अर्घ्य दिनुभन्दा पहिले (सूर्य) उदाउँदा वा अस्ताउँदा
एक सय आठ पटक गायत्री मन्त्र जपिनु पर्दछ ।

**यत्र प्रातरतिक्रामेदुपवासोऽह रुच्यते ।**
**तथा सायमतिक्रामेद्रात्रिं चोपवसेद् द्विजः ॥१३३॥**

बिहानको सन्ध्यावन्दन छुटे दिनभर र साँझको सन्ध्यावन्दन छुटे रातभर
केही नखानू, उपवास बस्नू ।

**यदद्य कच्च वृत्रहन् प्रातरर्घ्यमनुस्मृतः ।**
**उद्घेदभीति मध्याह्ने प्रायश्चित्तार्घ्यमुच्यते ॥१३४॥**
**न तस्ये ति च सायाह्ने ततोऽर्घ्यमुपसंहरेत् ॥१३५॥**

"यदद्य कच्च वृत्रहन्..." ले बिहान, "उद्धेदभि..." ले मध्याह्न "न तस्य..." मन्त्रले साँझ प्रायश्चित-अर्घ्य दिनु भनी बताइएको छ । अर्घ्यको विसर्जन सध्यास्थलमै गर्नू ।

**सूतके मृतके वापि सन्ध्याकर्म न सन्त्यजेत् ।**
**मनसोच्चारयेन्मन्त्रान् प्राणायाममृते द्विजः ॥१३६॥**

जुठोसूतकमा पनि द्विजले सन्ध्याकर्म गर्न नछाड्नू । प्राणायाम नगरी मनमनै मन्त्र उच्चारण गर्नू ।

**प्रणवेन तु संयुक्ता व्याहृतीः सप्त नित्यशः ।**
**सावित्रीं शिरसा सार्धं मनसा त्रिः पठेद् द्विजः ॥१३७॥**

द्विजले प्रणव अर्थात् ॐ, भूः आदि सात व्याहृती र शिरस् सहितको गायत्री मन्त्र  मनमनै तीन पटक पढ्नू ।

**देवार्चने जपे होमे स्वाध्याये श्राद्धकर्मणि ।**
**स्नाने दाने तथा ध्याने प्राणायामास्त्रयस्त्रयः ॥१३८॥**



देवताको पूजाआजामा, जपमा, होम गर्दा, नियमानुसार वेद पाठ गर्दा, श्राद्ध गर्दा, नुहाउँदा, दान दिँदा र ध्यान गर्दा तीन-तीन पटक प्राणायाम गर्नू ।

**आदावन्ते च गायत्र्यां प्राणायामास्त्रयस्त्रयः ।**
**सन्ध्यायामर्घ्यदाने च प्राणायामाः सकृत्सकृत् ॥१३९॥**

गायत्री मन्त्र जप गर्दा शुरु र अन्तमा तीन-तीन पटक प्राणायाम गर्नू । तर सन्ध्याकालको सन्ध्यावन्दन र अर्घ्य दिँदा एक-एक पटक प्राणायाम गर्नू ।

**अङ्गुष्ठानामिकाभ्यां तु तथैव च कनिष्ठया ।**
**प्राणायामस्तु कर्त्तव्यो मध्यमां तर्जनीं विना ॥१४०॥**
**तर्जनीं मध्यमां स्पृष्ट्वा जपन् शूद्रसमो भवेत् ॥१४१॥**

बूढी र साहिँली तथा बूढी र कान्छी औंलाले अर्थात् माझी र चोर औंला बाहेकका औंलाले प्राणायाम गर्नु पर्दछ । माझी र चोर औंला छोएर जप गर्ने मानिस शूद्र समान हुन्छ ।

**कृत्वोत्तानौ करौ प्रातः सायमधोमुखौ करौ ।**
**मध्ये स्कन्धभुजाभ्यां तु जप एवमुदाहृतः ॥१४२॥**

बिहान दुवै हात उत्तानो पारेर, साँझ दुवै हात घोप्टो पारेर र मध्याह्नमा काँध र पाखुरा सिधा हात राखी जप गरियोस् भनी बताइएको छ ।

**अधोहस्तं तु पैशाचं मध्यहस्तं तु राक्षसम् ।**
**बद्धहस्तं तु गान्धर्वमूर्ध्वहस्तं तु दैवतम् ॥१४३॥**

तल हात राखेर जप गर्नुलाई पैशाच, बीचमा हात राखेर जप गर्नुलाई राक्षस, हात बाँधेर जप गर्नुलाई गान्धर्व र हात उठाएर जप गर्नुलाई देवता-जप भनिन्छ ।

**प्रदक्षिणे प्रणामे च पूजायां हवने जपे ।**
**न कण्ठावृतवस्त्रः स्याद् दर्शने गुरुदेवयोः ॥१४४॥**

परिक्रमा गर्दा, ढोग्दा, पूजामा, होममा, जप गर्दा तथा गुरु र देवीदेवताको दर्शन गर्दा घाँटीमा माला लगाए जसरी कुनै कपडा बेरिएको हुनु हुँदैन ।

**दर्भहीना च या सन्ध्या यच्च दानं विनोदकम् ।**
**असङ्ख्यातञ्च यज्जप्तं तत्सर्वं निष्फलं भवेत् ॥१४५॥**

कुश बिनाको सन्ध्यावन्दन, जल बिनाको दान र सङ्ख्या बिनाको जप निष्फल हुन्छ ।

**जपस्य गणनां प्राहुः पद्माक्षैर्भक्तिवर्धनम् ।**
**जपेच्च तुलसीकाष्ठैः फलमक्षयमश्नुते ॥१४६॥**

कमलगट्टाले गनी गरिएको जपले भक्ति बढाउँदछ भने तुलसीको काठको मालाले गनेर गरिने जपले अक्षय फल दिन्छ ।

**अच्छिन्नपादा गायत्री ब्रह्महत्यां प्रयच्छति ।**
**छिन्नपादा तु गायत्री ब्रह्महत्यां व्यपोहति ॥१४७॥**

शब्दहरू नछुटचाई गरिने गायत्री मन्त्रको जप ब्रह्महत्या समान हुन्छ । तर शब्द छुट्टचाएर गरिने गायत्री जपले ब्रह्महत्याको पाप समेत नाश गर्दछ ।

**गृहस्थो ब्रह्मचारी च शतमष्टोत्तरं जपेत् ।**
**वानप्रस्थो यतिश्चैव जपेदष्टसहस्रकम् ॥१४८॥**

गृहस्थ र ब्रह्मचारीले एक सय आठ पटक तथा वानप्रस्थी र सन्यासीले एक हजार आठ पटक गायत्री जप गर्नू ।

**प्रस्थधान्यं चतुःषष्टेराहुतेः परिकीर्तितम् ।**
**तिलानां तु तदर्धं स्यात्तदर्धं स्याद् घृतस्य च ॥१४९॥**

चौसठ्ठी आहुति दिनका लागि एक प्रस्थ (लगभग चार अँजुली) अनाज लिनू भनिएको छ । यो चरुमा तिलको मात्रा आधा र  घिउको मात्रा त्यसको आधा हुनु पर्दछ ।

**आत्मारूढोऽप्सु मज्जेद्वा वदेद्वा पतितादिभिः ।**
**अथवा योषितं गच्छेदनृतौ काममोहितः ॥१५०॥**



आत्मामा अग्निलाई प्रवेश गराएको व्यक्ति चाहे पानीमा पसोस् वा पतित आदिसँग कुराकानी गरोस् अथवा ऋतुकाल बाहेकका दिनमा स्त्री-गमन नै किन नगरोस्..।

**वदन्त्येषु निमित्तेषु केचिदग्निविनाशनम् ।**
**आपस्तम्बस्य तन्नेष्टमात्मारूढः सदा शुचिः ॥१५१॥**

यसलाई केही अचार्यले अग्निको विनाश मान्दछन् । तर यो मतमा आपस्तम्ब सहमत छैनन् । उनी भन्दछन् "आत्मामा अग्निलाई प्रवेश गराएको व्यक्ति सधैं पवित्र हुन्छ" ।

**यस्य भार्या विदूरस्था पतिता वा रजस्वला ।**
**अनिच्छा प्रतिकूला वा तस्याः प्रतिनिधौ क्रिया ॥१५२॥**

जसकी पत्नी टाढा छिन्, पतिता छिन्, रजस्वला भएकी छिन्, अथवा मन गर्दिनन्, अथवा प्रतिकूल स्वभावकी छिन् उसले पत्नीको प्रतिनिधि बनाउनू ।

**अन्ये कुशमयीं पत्नीं कृत्वा तु प्रतिरूपिकाम् ।**
**केचिच्छरमयीं पत्नीं नित्यकर्माणि कारयेत् ॥१५३॥**

कसैले कुशको त कसैले उशीर (खश) को पत्नी बनाएर नित्य कर्म गराउँदछन् ।

**होमार्थं गोघृतं ग्राह्यं तदलाभे तु माहिषम् ।**
**आजं वा तदलाभे तु साक्षात्तैलं ग्रहीष्यते ॥१५४॥**

होमका लागि गाईको घिउ प्रयोग गर्नू । नपाए भैंसीको र त्यो पनि नपाए बाख्रीको घिउ प्रयोग गर्नू । त्यो पनि नपाए तिलको तेल प्रयोग गर्नू ।

**यः शूद्रादधिगम्यार्थमग्निहोत्रं करोति चेत् ।**
**दाता तत्फलमाप्नोति कर्ता तु नरकं व्रजेत् ॥१५५॥**
**ऋत्विजस्ते हि शूद्राः स्युर्ब्रह्मवादिषु गर्हिताः ॥१५६॥**

जो शूद्रसँग धन लिएर अग्निहोत्र गर्दछ, धन दिनेले त त्यसको फल प्राप्त गर्दछ नै तर गर्ने भने नरकमा पर्दछ । यस्तो ऋत्विज् ब्रह्मवादीबाट निन्दित शूद्र हुनेछ ।

**मेरुमन्दरतुल्यानि वाजपेयशतानि च ।**
**कन्याकोटिप्रदानञ्च न समं सायमाहुत् ॥१५७॥**

मेरु वा मन्दराचल तुल्य सैयौं वाजपेय यज्ञहरू तथा करोडौं कन्या दान पनि साँझको होम बराबर फलदायक हुँदैनन् ।

**कृतदारो न वै तिष्ठेत् क्षणमप्यग्निना विना ।**
**तिष्ठते चेद् द्विजो ब्राह्मयं त्यक्त्वा तु पतितो भवेत् ॥१५८॥**

विवाहित व्यक्ति एकछिन पनि अग्निबिना नबसोस् । यदि बस्दछ भने उ त्यो द्विज ब्रह्मत्व छाडी पतित हुन पुग्दछ ।

**समिदात्मसमारूढो द्विकालमहुतस्तथा ।**
**धारणाग्निश्चतुर्वारं स वह्निर्लौकिको भवेत् ॥१५९॥**

समिधा मार्फत जुन अग्निलाई आफूमा आरोहण गराइएको हुन्छ, जुन अग्निमा बिहानबेलुकी होम हालिन्न तथा जुन अग्निलाई चार पटक धारण गरि सकिएको छ त्यो अग्नि लौकिक अग्नि हुन पुग्दछ ।

**आरोपिताग्नेः समिधस्तु नाशे सीमादिलङ्घे च पराग्निवेशे ।**
**अयाश्च मन्त्रेण चतुर्गृहीत्वा तेनैव मन्त्रेण सकृज्जुहोति ॥१६०॥**

आधान गरिएको वा जगाइएको अग्निको समिधा नष्ट भएर वा त्यसको सीमा नाघिएर अर्को अग्नि ग्रहण गर्दा "अयाश्च..." मन्त्रले चार पटक घिउ लिई एक पटक आहुती दिइन्छ ।

मन्त्र २४ : ॐ अयाश्चाग्नेऽस्यनभिशस्तिश्च सत्यमित्त्वमया असि ।
अयाः सन् मनसा कृत्तोऽयाः सन् हव्यमूहिषेऽया नो धेहि भेषजꣳ स्वाहा ॥
(मैत्रायणी संहिता : १।४।३)

**ब्रह्मयज्ञे जपेत्सूक्तं पौरुषं चिन्तयन् हरिम् ।**

**स सर्वान् जपते देवान् साङ्गोपाङ्गविधानतः ॥१६१॥**

ब्रह्मयज्ञमा विष्णुको ध्यान गर्दै पुरुष-सूक्त जप गर्नू । (यसो गर्दा) उसले सबै देवताको पूर्ण विधिले जप गरे समान हुन्छ ।

**वेदाक्षराणि यावन्ति नियुज्यादर्थकारणात् ।**
**तावतीं ब्रह्महत्यां वै वेदविक्रय्यवाप्नुयात् ॥१६२॥**

जसले वेदका जति अक्षर धन कमाउने दृष्टिले उपयोग गर्दछ, उसले त्यति नै सङ्ख्याको वेद बेचेर हुने ब्रह्महत्या गरेको पाप कमाउँदछ ।

**प्रख्यापनं प्राध्ययनं प्रश्नपूर्वप्रतिग्रहः ।**
**याजनाध्यापने वादः षड्विधो वेदविक्रयः ॥१६३॥**

अर्थ बताउँदा वा लेख्दा, पढ्दा, उत्तर दिँदा वा सोध्दा, यज्ञ गर्दा वा गराउँदा, पढाउँदा र छलफल गर्दा (हुने धनको लेनदेन) गरी छ प्रकारका वेद-विक्रय हुन्छन् ।

**आरवारे च शौक्रे च मन्वादिषु युगादिषु ।**
**नाहरेत्तुलसीपत्रं मध्याह्नात्परतस्ततः ॥१६४॥**

मङ्गलबार, शुक्रबार, मन्वन्तरको पहिलो तिथि, युगको पहिलो तिथि र मध्याह्नभन्दा पछि तुलसीपत्र नटिप्नू ।

**सङ्क्रान्त्यां पक्षयोरन्त्ये द्वादश्यां निशिसन्ध्ययोः ।**
**तुलसीं ये विचिन्वन्ति ते कृन्तन्ति हरेः शिरः ॥१६५॥**

जसले सङ्क्रान्ति, पूर्णिमा र औँसी, द्वादशी, रातमा र दुवै सन्ध्यामा जसले तुलसीपत्र टिप्दछन् तिनले विष्णुको शिर काट्दछन् ।

**तीर्थे पापं न कुर्वीत न कुर्याच्च प्रतिग्रहम् ।**
**दुर्जरं पातकं तीर्थे दुर्जरश्च प्रतिग्रहः ॥१६६॥**

तीर्थमा पाप नगर्नू, दान पनि नलिनू । तीर्थमा गरिएका पाप र लिइएको दानको दोष चाँडै नाश हुँदैन ।



**ऋतामृताभ्यां जीवेत मृतेन प्रमृतेन वा ।**
**सत्यानृताभ्यामपि वा न श्ववृत्त्या कथञ्चन ॥१६७॥**

शिला खोजेको अन्नले (ऋतवृत्ति), नमागी पाइने कुराले (अमृतवृत्ति), भिक्षा मागेर (मृतवृत्ति), कृषि गरेर (प्रमृतवृत्ति) वा ब्यापारव्यवसाय (सत्यानृतवृत्ति) गरेर ज्यान पाल्नू तर नोकरी ( श्वानवृत्ति) गरेर पेट नपाल्नू ।

**यो राज्ञः प्रतिगृह्यैव शोचितव्ये प्रहृष्यति ।**
**न जानाति किलात्मानं विष्टकूपे निपातितम् ॥१६८॥**

जो राजाबाट दान लिँदा दुःखी हुनुपर्नेमा खुशी हुन्छ उ आफ्नो आत्मा मलको कुवामा खसेको छ भन्ने कुरा थाहा पाइरहेको हुँदैन ।

**तृणं वा यदि वा काष्ठं मूलं वा यदि वा फलम् ।**
**अनापृष्ट्वैव गृह्णीयाद्धस्तछेदनमर्हति ॥१६९॥**

घाँसपात होस् वा काठ, कन्दमूल होस् वा फलफूल यदि नसोधी लिइन्छ भने त्यस्तो लिने हात काटिन योग्य हुन्छ ।

**वानस्पत्यं मूलफलं दार्वग्न्यर्थं तथैव च ।**
**तृणञ्च गोभ्यो ग्रासार्थमस्तेयं मनुरब्रवीत् ॥१७०॥**

मनुले भने जङ्गली वृक्षबाट (पूजाका लागि लिइएको) कन्दमूल र फल, होमका लागि लिइएको दाउरा र गाईका लागि लिइएको घाँस "चोरी हुँदैन" भनेका छन् ।

**भ्रूणहत्यां वार्धुषिं च तुलायां समतोलयत् ।**
**अतिष्ठद् भ्रूणहा कोटचां वार्धुषिः समकम्पत ॥१७१॥**

भ्रूणहत्या र ब्यजखोरीलाई तराजूमा एकैपटक हालेर जोखियो । लामो समयसम्म भ्रुणहत्या चूपचाप बस्यो तर ब्याजखोरी काँपी रह्यो ।

**अयाचिताहृतं ग्राह्यमपि दुष्कृतकारिणः ।**
**अन्यत्र कुलटाषण्डपतितेभ्यस्तथा द्विषः ॥१७२॥**

नमागीकन पाइने (वा दिइएका) कुरा लिन हुने भएपनि दराचारी, कुलटा, उभयलिङ्गी, पतित र द्वेषी बाहेककाले दिएको मात्र लिनु पर्दछ ।

**महापातकिनश्चोराद् दम्भिकाद् भिषजस्तथा ।**
**मृगयोः पिशुनाच्चैव नादद्यादाहृतं द्विजः ॥१७३॥**

महापापी, चोर, घमण्डी, वैद्य, शिकारी र कञ्जुषले लेराएका कुरा द्विजले नलिनू ।

**कुलटाषण्डपतितवैरिभ्यः काकिणीमपि ।**
**उद्यतामपि न गृह्णीयादापद्यपि कदाचन ॥१७४॥**

कुलटा, उभयलिङ्गी, पतित र शूले केही कुरा दिन चाहे आपदमा पनि कहिल्यै एक पैसा पनि नलिनू ।

**परार्थे तिलहोतारं परार्थे मन्त्रजापिनम् ।**
**मातापित्रोरपोष्टारं दृष्ट्वा चक्षुर्निमीलयेत् ॥१७५॥**

अर्काका लागि तिल होमी दिने, अर्काका लागि मन्त्र जपिदिने र आमाबाबुलाई नपाल्ने व्यक्तिलाई कतै देखिए पनि आँखा बन्द गर्नू ।

**कुक्कुटश्वानमार्जारान् पोषयन्ति दिनत्रयम् ।**
**इह जन्मनि शूद्रत्वं मृते श्वा चाभिजायते ॥१७६॥**

कुखुरो, कुकुर र बिरालोलाई जसले (ब्राह्मणले) तीन दिन मात्र पालनपोषण गर्दछ उसले यही जन्ममा शूद्रत्व प्राप्त गर्दछ र मरेपछि अर्को जुनीमा कुकुर भएर जन्मन्छ ।

**परहिंसारताः क्रूराः परदारपरायणाः ।**
**परद्रव्यापहारी च चण्डाला यस्तु निर्दयः ॥१७७॥**

अरुको हिँसामा अभ्यस्त, क्रूर, परस्त्रीसँग प्रेम गर्ने, अर्काको धन खोस्ने र निर्दयी मानिस : यी सबै चाण्डाल हुन् ।



**नगरे पट्टणे वापि द्वादशाब्दं तु यो वसेत् ।**
**स जीवन्नेव शूद्रत्वमाशु गच्छति सान्वयः ॥१७८॥**

साना वा ठूला शहरमा बाह्र वर्षसम्म जो बस्दछ, उ जीवनकालमै परिवारसहित तुरुन्त शूद्रत्वमा पुग्दछ ।

**राजाश्रयेण यो मर्त्यो द्वादशाब्दं वसेद्यदि ।**
**जीवमानो भवेच्छूद्रो नात्र कार्या विचारणा ॥१७९॥**

जो (द्विज) बाह्र वर्षसम्म राजाका आश्रयमा बस्दछ उ जीवनकालमै शूद्र हुन पुग्दछ, यसमा सोचविचार गरिरहनु पर्ने कुनै कुरा छैन ।

**अनृतं स्वसमुत्कर्षो राजगामी च पैशुनम् ।**
**गुरोश्चालीकनिर्बन्धः समानि ब्रह्महत्यया ॥१८०॥**

भूट, आफ्नो मात्र उत्कर्ष हुने चाहना, राजाको पछि लाग्ने कार्य, कञ्जुस्याइँ र गुरुले असत्यप्रति गर्ने भुकाव : यी सबै ब्रह्महत्या समान हुन् ।

**यस्मिन्देशे यदा काले यन्मुहूर्ते च यद्दिने ।**
**हानिर्वृद्धिर्यशो लाभः तत्तथा न तदन्यथा ॥१८१॥**

जुन देशमा, जुन समयमा, जुन मुहूर्तमा र जुन दिनमा जेजस्ता नोक्सानी, वृद्धि, कीर्ति र लाभ पाइने भनिएका छन्, ती त्यही स्थान र समयमा पाइन्छन् । यसमा अन्यथा हुँदैन ।

**अज्ञात्वा धर्मशास्त्राणि प्रायश्चित्तं वदन्ति ये ।**
**तत्पापं शतधा भूत्वा तद्वक्तॄनधिगच्छति ॥१८२॥**

शास्त्र-ज्ञान नभई जसले प्रायश्चितका बारेमा बताउँदछ उसको त्यो पाप सैयौं गुना भएर प्रायश्चित बताउनेलाई लाग्दछ ।

**चत्वारो वा त्रयो वापि यद् ब्रूयुर्वेदपारगाः ।**
**स धर्म इति विज्ञेयो नेतरस्तु सहस्रशः ॥१८३॥**



चार वा तीन वेदका ज्ञाता जे कुरालाई धर्म भन्दछन्, त्यही धर्म हो भनी जान्नू । अरुले हजार पटक भने पनि त्यो धर्म हुँदैन भनी जान्नू ।

**ये पठन्ति द्विजा वेदं पञ्चयज्ञरताश्च ये ।**
**त्रैलोक्यं तारयन्त्येते पञ्चेन्द्रियरता अपि ॥१८४॥**

जो द्विज वेद पढ्दछन्, नित्य पाँच किसिमका यज्ञ गर्दछन्, ती पाँच इन्द्रियजन्य कर्ममा लिप्त हुँदा पनि मोक्ष हुन्छन् ।

**यथा काष्ठमयो हस्ती यथा चर्ममयो मृगः ।**
**ब्राह्मणश्चानधीयानस्त्रयस्ते नामधारकाः ॥१८५॥**

काठले बनाइएको हात्ती, छाला मोरेर बनाइएको मृग र वेद नपढ्ने ब्राह्मण : यी तीन नाम मात्रका हुन्छन् ।

**संवत्सरेण पतति पतितेन सहाचरन् ।**
**याजनाध्यापनाद्धीनो न तु शय्यासनाशनात् ॥१८६॥**

एक वर्षसम्म पतितसँग बस्ने ब्राह्मण पतित हुन्छ । उ यज्ञकर्म र अध्यापन गर्नबाट छुट्‌छ । तर (केही दिन) सँगै सुत्दा, बस्दा र खाँदा उ त्याज्य हुँदैन ।

**सर्वे ब्रह्म वदिष्यन्ति सम्प्राप्ते तु कलौ युगे ।**
**नानुतिष्ठन्ति वेदोक्तं पाषण्डोपहता जनाः ॥१८७॥**

कलियुग आएपछि सबै जना ब्रह्मज्ञानका उपदेशक हुन्छन् । तर ती पाखण्डी आफैं भने वेदले बताएका कर्म र आचरण भने गर्दैनन् ।

**षष्ठ्यष्टमी हरिदिनं द्वादशी च चतुर्दशी ।**
**पर्वद्वयञ्च सङ्क्रान्तिः श्राद्धाहो जन्मतारिका ॥१८८॥**
**श्रवणव्रतकालश्च विशेषदिवसास्तथा ।**
**एते काला निषिद्धाः स्युर्भद्रे मैथुनकर्मणि ॥१८९॥**

षष्ठी, अष्टमी, एकादशी, द्वादशी, चतुर्दशी, पूर्णिमा, औंसी, सङ्क्रान्ति, श्राद्ध खाएको वा गरेको दिन, आफू जन्मेको तिथि, श्रवण नक्षत्र (वा देवताको भक्ति गरेका रात), व्रत बसेका रात र विशेष दिन (?) : यी दिन  (वा समय) मैथुन गर्न उत्तम नहुने समय हुन् ।

**कृते सम्भाष्य पतति त्रेतायां दर्शनेन तु ।**
**द्वापरे त्वन्नमादाय कलौ पतति कर्मणा ॥१९०॥**

सत्ययुगमा (गलत) बोल्नाले, त्रेतायुगमा (गलत कुरा) हेर्नाले, द्वापर युगमा (गलत तरिकाले) अनाज लिनाले तथा कलियुगमा कर्मले गर्दा नै मानिस पतित हुन्छ ।

**चतुर्दश्यष्टमी चैव ह्यमावस्या च पूर्णिमा ।**
**पर्वाण्येतानि विप्रेन्द्र रविसङ्क्रान्तिरेव च ॥१९१॥**

हे विप्रेन्द्र ! चतुर्दशी, अष्टमी, औंसी, पूर्णिमा र सूर्य-सङ्क्रान्ति : यी पर्व हुन् ।

**अर्थार्थं यानि कर्माणि करोति कृपणो जनः ।**
**तान्येव यदि धर्मार्थं कुर्वन् को दुःखभाग्भवेत् ॥१९२॥**

जो कञ्जुस धन कमाउनका जे कर्म गर्दछ त्यही कर्म धर्मका लागि गरिए (संसारमा) को नै दुःखी हुन्थ्यो र ?

**चैत्यवृक्षं चितिं यूपं चण्डालं वेदविक्रयीम् ।**
**अज्ञानात् स्पृशते यस्तु सचेलो जलमाविशेत् ॥१९३॥**

कुनै पवित्र ठाउँमा लगाइएको डुम्रीको रूख, चिता, मौलो, चण्डाल र वेदविक्रेतालाई भुक्किएर छोए पनि (शुद्धताका लागि) सवस्त्र जलमा डुबुल्की लगाउनू ।

**इक्षूनपः फलं मूलं ताम्बूलं पय औषधम् ।**
**विक्रयित्वा तु कर्तव्याः स्नानदानादिकाः क्रियाः ॥१९४॥**

उखु, पानी, फलफूल, कन्दमूल, पान, दूध र ओखती बेचबिखन गरिए (प्रायश्चितका लागि) नुहाउने र दान आदि दिने काम गर्नू ।

**श्रुतिः स्मृतिर्ममैवाज्ञा यस्तामुल्लङ्घ्य वर्तते ।**
**आज्ञाच्छेदी मम द्रोही मद्भक्तोऽपि न वैष्णवः ॥१९५॥**
**विष्णुना तु पुरा गीतमेवं तत्तु मयेरितम् ॥१९६॥**

"श्रुति, स्मृतिले बताएका कुरा मेरा आदेश हुन् । यसैले जसले यिनको उल्लङ्घन गर्दछ उसले मेरो आदेशलाई उल्लङ्घन गरेको हुनेछ । मसँग द्रोह गर्ने मेरै भक्त भएपनि त्यो वैष्णव होइन" । विष्णु भगवान्ले पहिले नै बताउनु भएका यी कुरा नै मबाट यहाँ बताइएका छन् ।

**श्रुतिस्मृति तु विप्राणां चक्षुषी द्वे विनिर्मिते ।**
**काणस्तत्रैकया हीनो द्वाभ्यामन्धः प्रकीर्तितः ॥१९७॥**

श्रुति र स्मृतिलाई ब्राह्मणका दुई आँखा हुन् भनी बताइएको छ । यसैले यसमध्ये कुनै एकको ज्ञान नहुँदा उ कानो र दुवैको ज्ञान नहुँदा उ अन्धो हुन्छ ।

**चर्मखण्डनभक्षाणां शुनाघ्रातमरोचकम् ।**
**पापपूरितदेहानां धर्मशास्त्रमरोचकम् ॥१९८॥**

छालाको टुक्रा खाने व्यक्तिलाई कुकुरले सुँघेको मन नपरे जस्तै पापले भरिएको शरीरलाई धर्मशास्त्र मन पर्दैन ।

**अहेरिव रणाद् भीतः सन्मान्मरणादिव ।**
**कुणपादिव च स्त्रीभ्यस्तं देवा ब्राह्मणं विदुः ॥१९९॥**

जो युद्धलाई सर्पसमान, सन्मानलाई मरणसमान र स्त्रीलाई लाशसमान ठानी डराउने गर्दछ देवताहरू त्यसलाई ब्राह्मण भनी चिन्दछन् ।

**शान्तं दान्तं जितक्रोधं जितात्मानं जितेन्द्रियम् ।**
**तमग्र्यं ब्राह्मणं मन्ये शेषाः शूद्राः प्रकीर्तिताः ॥२००॥**

शान्त, दान दिन तत्पर, रिसलाई जितेका, आत्मालाई जितेका र इन्द्रियलाई जितेकालाई नै श्रेष्ठ ब्राह्मण मान्दछु । अरु त शूद्र नै हुने भनी बताइएको छ ।



**ब्राह्मणस्य च देहोऽयं नोपभोगाय कल्पते ।**
**इह क्लेशाय महते प्रेत्यानन्तसुखाय च ॥२०१॥**

ब्राह्मणको यो शरीर सुख भोगका लागि बनेको होइन । यो शरीर त बाँचुञ्जेल ठूलो कष्ट सहँदै मृत्युपछि सुख पाउनका लागि बनेको हो ।

**दर्शे तिलोदकं दद्याच्छुष्कवासा जलाद्बहिः ।**
**आर्द्रवस्त्रो यदि तदा निराशाः पितरो गताः ॥२०२॥**

औँसीमा सुकेका कपडा लगाई जलभन्दा बाहिर तिल-जल दिनू । कपडा चिसा भए पितृहरू निराश भएर फर्कन्छन् ।

**शिलातले पटे पत्रे रोमस्थानेषु कुत्रचित् ।**
**ते तिलाः कृमितुल्याः स्युस्तत्तोयं रुधिरं भवेत् ॥२०३॥**

पत्थरमाथि, कपडा माथि, पात माथि र रौं भएका स्थान माथि परेको तिल कीरासमान र परेको जल रगत समान हुन्छ । (तिलजल दिँदा ध्यान दिनू) ।

**अङ्गुष्ठोदरमूले तु तिलान्निक्षिप्य तर्पयेत् ।**
**ते तिला मेरुतुल्याः स्युस्तत्तोयं सागरोपमम् ॥२०४॥**

बूढी औंलाको भित्री फेदमा तिल राखेर तर्पण गर्नू । यस्तो तिल मेरु पर्वत समान र यस्तो जल सागर समान हुन्छ ।

**पानीयमप्यत्र तिलैर्विमिश्रं दद्यात्पितृभ्यः प्रयतो मनुष्यः ।**
**श्राद्धं कृतं तेन समाः सहस्रं रहस्यमेतत्पितरो वदन्ति ॥२०५॥**

पवित्र भएको मानिसले पितृका लागि तिल मिसिएको जल अर्पण गर्दछ भने उसले गरेको त्यो श्राद्ध हजारौं श्राद्ध समान हुन्छ । यो रहस्य पितृहरूले नै बताएका छन् ।

**मासिके च सपिण्डे च प्रति सम्वत्सरे तथा ।**
**व्यर्थं भवति तच्छ्राद्धं वासुदेवं विना कृतम् ॥२०६॥**

मासिकमा, सपिण्डीमा र वर्षदिनमा वासुदेवको पूजा नगरी
गरिने श्राद्ध व्यर्थ हुन्छन् ।

**जपस्तपः श्राद्धकर्म स्वाध्यायादिकमेव च ।**
**व्यर्थं भवति तत्सर्वमूर्ध्वपुण्ड्रं विना कृतम् ॥२०७॥**

उर्ध्वपुण्ड्र नलगाई गरिने जप, तप, श्राद्ध, स्वाध्याय आदि सबै व्यर्थ हुन्छन् ।

**श्राद्धं कृत्वा परदिने न द्विजान् भोजयेद्यदि ।**
**तच्छ्राद्धमासुरं लोके प्रवदन्ति विपश्चितः ॥२०८॥**

विद्वानहरू श्राद्धको भोलिपल्ट ब्राह्मणहरूलाई भोजन
नगराइएको श्राद्धलाई आसुर-श्राद्ध भन्दछन् ।

**श्राद्धं कृत्वा परदिने ब्राह्मणान् भोजयेद्यदि ।**

**देवाश्च पितरस्तुष्टाः कर्तुः कुर्वन्ति सम्पदः ॥२०९॥**

श्राद्ध गरेर भोलिपल्ट ब्राह्मणहरूलाई भोजन गराइन्छ भने देवता र पितृ खुशी भई उसको सम्पदा बढाउँदछन् ।

**श्राद्धे पाकमुपक्रम्य नान्दीश्राद्धं विवाहके ।**
**व्रतं चरति सङ्कल्पे सूतकेऽपि न दोषभाक् (सूतकं तु न दोषकृत्) ॥२१०॥**

श्राद्धमा पकाउने तुल्याउने काम भइसकेपछि, विवाहमा नान्दिमुखी श्राद्ध गरिसकेपछि र व्रत बस्नुपूर्व सङ्कल्प गरेपछि सूतकको पनि दोष लाग्दैन ।

**श्राद्धे तु विकिरं दत्त्वा नाचामेन्मतिविभ्रमात् ।**
**पितस्तस्य षण्मासं चाण्डालोच्छिष्टभोजनाः ॥२११॥**

श्राद्धमा विकिर दिएपछि भ्रमवश आचमन गर्दैन भने त्यसका पितृ महिनासम्म चाण्डालको जुठो खान बाध्य हुन्छन् ।



**सहोदराणां पुत्राणां पितुरेकदिने तथा ।**
**श्राद्धे निमन्त्रणं वर्ज्यं क्षुरकर्म तथैव च ॥२१२॥**

सहोदर बाउछोरालाई एकै दिन श्राद्धमा निम्ता गर्न हुँदैन । यसैगरी क्षौरकर्म पनि गर्न हुँदैन ।

**विधुरं च यतिं चैव सगोत्रं ब्रह्मचारिणम् ।**
**देवार्थे वरयेद्विद्वान् पित्रर्थे न कदाचन ॥२१३॥**

विधुर, सन्यासी, सगोत्री र ब्रह्मचारीलाई देवकर्मका लागि वरण गर्नू तर यिनलाई कहिल्यै पनि पितृकर्ममा वरण नगर्नू ।

**वासांसि वाससी वासो यो ददाति पितुर्दिने ।**
**स तु सङ्ख्यातवर्षेण देवलोके महीयते ॥२१४॥**

पिताको श्राद्धका दिन जसले वस्त्रहरू वा दुई वस्त्र वा एक वस्त्र भएपनि दान गर्दछ उ

उ गन्ती गरिएका वर्षमा स्वर्गमा पूजित हुन्छ ।

**अभिश्रपणहीनं तु यः श्राद्धं कुरुते नरः ।**
**तदन्नं मांससदृशं तद्रसं सुरया समम् ॥२१५॥**

जो मानिस ऋचा नदोहोऱ्याई श्राद्ध गर्दछ उसले श्राद्धमा दिएको अन्न मासुसमान र दिएको रस मदिरा समान हुन्छ ।

**उदक्यायाः पतिं तावत्सूतिकाया पतिं तथा ।**
**भाण्डस्पर्शनपर्यन्तं पैतृके वर्जयेत्सुधीः ॥२१६॥**

विद्वानले रजस्वला र सुत्केरीको लोग्नेलाई भाण्डस्पर्शन (?) नहुँदासम्म पैत्रिक कार्यमा निषेध गर्नू ।

**विभक्ता भ्रातरः सर्वे स्वस्वार्जितधनाशनैः ।**
**दर्शाब्धिकं तथा पित्रोः श्राद्धं कुर्यात् पृथक् पृथक् ॥२१७॥**



छुट्टिभिन्न बसेका दाजुभाईले आफूले कमाएको धन र भोजनले दर्श, वार्षिक र पिताको श्राद्ध बेग्लाबेग्लै गर्नू ।

**संन्यासी बहुभक्षश्च वैद्यो वैखानसस्तथा ।**
**गर्भवान् वेदहीनश्च दानं श्राद्धं च वर्जयेत् ॥२१८॥**

सन्यासी, खञ्चुवा, वैद्य, वैखानस सम्प्रदायको व्यक्ति, गर्भवतीको पति र वेदहीनले दान लिने र श्राद्धमा गएर खाने काम नगर्नू ।

**स्नाने दाने जपे होमे स्वाध्याये पितृकर्मणि ।**
**देवताराधने चैव त्याज्यदोषो न विद्यते ॥२१९॥**

नुहाउँदा, दान गर्दा, जप गर्दा, होम हाल्दा, वद पढ्दा, पितृकर्ममा र देवपूजामा त्याग गर्नुपर्ने कुरा वा व्यक्तिलाई त्याग गरेको दोष लाग्दैन ।

**प्रत्याब्दिके शतं जप्यं मासिके स्यादे द्विषट्शतम् ।**
**सपिण्डे त्रिसहस्रं स्याच्छ्राद्धे त्रिंशत्सहस्रकम् ॥२२०॥**

वार्षिकीमा सय पटक, मासिकमा बाह्र सय पटक, सपिण्डीमा तीन हजार पटक र श्राद्धमा तीस हजार पटक जप गर्नू ।

**मासिके पक्षमेकं स्यादाब्दिके च तदर्धकम् ।**
**एकोद्दिष्टे वत्सरं स्यात् षाण्मासं तु सपिण्डने ॥२२१॥**
**महालये त्रिरात्रं स्याच्छ्राद्धे त्वाकालिकं भवेत् ॥२२२॥**

मासिकमा पन्ध्र दिन, वार्षिकमा त्यसको आधा, एकोद्दिष्टमा एक वर्ष, सपिण्डमा छ महिना, सोह्रश्राद्धमा तीन रात र श्राद्धमा त्यही बेला हुन्छ (???) ।

**श्राद्धान्नं तिलहोमं च दूरयात्रां प्रतिग्रहम् ।**
**सिन्धुस्नानं गयाश्राद्धं वपनं शवधारणम् ॥२२३॥**
**पर्वतारोहणं चैव गर्भकर्ता तु वर्जयेत् ॥२२४॥**



श्राद्धको भोजन, तिलको होम, टाढाको यात्रा, दान लिने काम, समुद्रको स्नान, गयामा गएर श्राद्ध गर्ने, कपाल खौरन, लाश बोक्न र पहाड चढ्न : यी काम गर्भकर्ताका लागि वर्जित छन् ।

**गभृकर्ता तु यो विप्रः षण्मासाभ्यन्तरे यदि ।**
**श्राद्धान्नादीनि कुर्वाणो क्षिप्रमेव विनश्यति ॥२२५॥**

गर्भकर्ताले छ महिना यता श्राद्ध आदि खाएको छ वा खान्छ भने उ चाँडै नष्ट हुन्छ ।

**मध्यन्दिने दृढाङ्गो यः स्नानं त्यक्त्वाऽर्चयेद्धरिम् ।**
**वैश्वदेवं च यः कुर्यात्स गुल्मव्याधिपीडितः ॥२२६॥**

स्वस्थ शरीर हुने व्यक्ति मध्यदिनमा ननुहाई विष्णुको आराधना गर्दछ वा वैश्वदेव गर्दछ भने उ गानुगोलाको रोगी हुन्छ ।

**पितस्तत्र मोदन्ते गायन्ते च पितामहाः ।**

**प्रपितामहाश्च नृत्यन्ते श्रोत्रिये गृहमागते ॥२२७॥**

श्रोत्रिय ब्राह्मण घरमा आउँदा पिताहरू खुशी हुन्छन्, पितामहहरू गाउँदछन् र प्रपितामहहरू नाच्दछन् ।

**देशान्तरे दुरन्नानां प्रायश्चित्तद्वयं स्मृतम् ।**
**समुद्रगानदीस्नानं शिष्टागारेषु भोजनम् ॥२२८॥**

विदेश गएर खान नहुने कुरा खानेका लागि दुई थरी प्रायश्चित बताइएको छ : समुद्रसम्म बहने नदीमा स्नान गर्नू वा शिष्टागार (?) मा गएर खाना खानू ।

**अनाचारस्य विप्रस्य पतितान्नं यतेस्तथा ।**
**शूद्रान्नं विधवान्नं च श्वमांससदृशं भवेत् ॥२२९॥**

आचारहीन ब्राह्मणको, पतितको, सन्यासीको, शूध्रको र विधवाको अन्न कुकुरको मासु समान हुन्छ ।



**यो मोहादथवाऽऽलस्यादकृत्वा केशवार्चनम् ।**
**भुङ्क्ते स याति नरकं श्वानयोनिषु जायते ॥२३०॥**

जो मानिस मोहमा परी वा अल्छी गरेर विष्णुको आराधना नगरी खाना खान्छ, उ नरकमा पर्दछ र कुकुर भएर जन्मन्छ ।

**अनृतं मद्यगन्धं च दिवस्वापं च मैथुनम् ।**
**पुनाति वृषलस्यान्नं सायं सन्ध्या बहिःकृता ॥२३१॥**

बाहिर गरिएको साँझको सन्ध्यावन्दनले झूटो बोलेको, मद्यगन्ध, दिउस सुतेको, मैथुन जन्यदोष र पतितको अन्न खाएको दोषलाई पवित्र पार्दछ ।

**स्नानं सन्ध्यां जपं होमं स्वाध्यायं पितृतर्पणम् ।**
**देवताराधनं चैव वैश्वदेवं यथाविधि ॥२३२॥**
**न कुर्याद्यदि मोहेन चण्डालो नात्र संशयः ॥२३३॥**

स्नान, सन्ध्या, जप, होम, वेदाध्ययन, पितृतर्पण, देवताको आराधना तथा बलिवैश्वदेव मोहमा परी जसले विधिपूर्वक गर्दैन, उ चाण्डाल हो, यसमा कुनै शङ्का छैन ।

## ॥ इति वाधूलस्मृतिः ॥



नेपालको बाग्मती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.स., वडा नं.३, चारघर टोलमा जन्म भई सोही अञ्चल, काठमाडौं जिल्ला, गोकर्णेश्वर नगरपालिका, वडा नं.७ मा बसोबास गर्ने मोहनप्रसाद सापकोटाद्वारा गरिएको वाधूलस्मृतिको नेपाली भावानुवाद पूर्ण भयो ।



**सबैको कल्याण होस !**